# जीवनको छेउबाट

(कवितासङ्ग्रह)

सुमन पोखरेल



| | | |
|---|---|---|
| कृति | : | जीवनको छेउबाट |
| विधा | : | कविता |
| कवि | : | सुमन पोखरेल |
| सर्वाधिकार© | : | कविमा |
| प्रकाशक | : | वाणी प्रकाशन, विराटनगर<br>फोन नं. ०२१–५२८१२० |
| संस्करण | : | प्रथम, २०६६ पुस |
| प्रकाशित प्रति | : | १००० |
| मुद्रक | : | मयुरी प्रिन्टर्स, विराटनगर |
| मूल्य | : | रु. २००/– |
| ISBN | : | 978-99946-36-556 |

*Jeevanko Chheubaata*

A Collection of Nepali Poems

by

*Suman Pokhrel*

# समर्पण

ती समयहरूप्रति
जसजसमा बाँचेर यी लेखिए ।

**सुमन पोखरेल**

**जन्म:** असोज ५, २०२४; कचिँडे, धनकुटा

**सम्पर्क:** १११ – बुद्धविहार मार्ग, अलका बस्ती, विराटनगर–१५
फोन: ०२१ ५२४९२७
मोबाइल: ९८४२०३०५७५; ९७४२०२२१५३
इमेल: suman_pokhrel@yahoo.com
suman.pokhrel@gmail.com

**प्रमुख लेखन विधाः**

कविता; गीत; गजल: लघुकथा

**प्रकाशित कृति:**

- हजार आँखा : यी आँखामा (गीतसङ्ग्रह) – २०५९
- शून्य मुटुको धड्कनभित्र (कवितासङ्ग्रह) – २०५६

**अन्तर्राष्ट्रिय साहित्यिक सहभागिता:**

- २९ औं सार्क लेखक सम्मेलन – २००९; आगरा, भारत
- प्रथम सार्क युवाकवि सम्मेलन – २००८; उडिसा, भारत
- अन्तर्राष्ट्रिय साहित्य सम्मेलन – २००८; रायपुर, भारत
- अन्तर्राष्ट्रिय लघुकथा महोत्सव – २००८; रायपुर, भारत

**संलग्नता:**

- वाणी प्रकाशन
- साहित्यसञ्चार प्रतिष्ठान
- आरोहण गुरुकुल

**शिक्षा:**

बी.एस्सी; एम. बी. ए; बी. एल.

---

# प्रकाशकीय

कवि सुमन पोखरेलको यो नवीन कवितासङ्ग्रहले पाठकलाई यौटा यात्रीजस्तै बनाउँछ जो नयाँ देशमा पुगेको छ र प्रत्येक बाटामा नयाँ कुराहरू देखेर पुलकित छ। हरेकजसो कवितामा आफ्नै गीत, आफ्नै कथा, आफनै जीवनी पढेजस्तो आनन्दतिरेकले पाठकले स्वीकार्दछ पुस्तकलाई। पाठक कल्पनाशील हुन्छ र औसत जीवनदेखि माथि उठेर देख्दछ जगतलाई, जीवनलाई। यो उडान वहाँको कविताको भूमि टेकेपछि सहज र सम्भव लाग्दछ।

प्रा. डा. अभि सुवेदीज्यूको भूमिकाले भन्दछ - कवि पोखरेलका कविताहरूमा यौटा सुन्दर प्रदेश भेटिन्छ जहाँ खोजी र आनन्दका अनेक सम्भावनाहरू छन्। ताजा बिम्ब, सङ्गीत, विषयको विविधता र प्रस्तुतिको नयाँ बाटो आदिले यो सङ्ग्रह हाम्रो काव्यिक जगतमा नयाँ प्राप्ति भएको छ।

वाणी प्रकाशनले यसअघि पनि कवि पोखरेलका एक कविता सङ्ग्रह र एक सुन्दर गीतसङ्ग्रह प्रकाशित गरिसकेको छ। वहाँ एक गम्भीर बौद्धिक कवि र कल्पनाशील सर्जक भेटिएको यौटा दोभानबाट सम्बोधन गर्नुहुन्छ। कविको यो तेस्रो पुस्तक प्रकाशनमा देखिने मञ्च भैदिएर, हुन पाएर वाणी प्रकाशन धन्य भएको छ। वाणीलाई यो मौका दिएर कवि पोखरेलले वाणी प्रतिको निष्ठा र प्रेम पनि प्रकट गर्नुभएको छ। वहाँलाई हाम्रो शुभकामना।

**वाणी प्रकाशन**

# वैकल्पिक चिन्तन र काव्यसामर्थ्य
## सुमन पोखरेलका कविताको आधार

डा. अभि सुवेदी

*इन्द्रेनी पनि लत्पतिएर टाँगिएजस्तो*
*पानी पनि सुइरो भएर बर्सिएजस्तो*
*घाम उदाएर पनि बस्तीको आकाशलाई समेत नछोई उम्किभागेजस्तो*
*उनीहरूको सपनामाथिको ठट्टा देखेर*
*मलाई रोऊँरोऊँ भइरहेथ्यो ।*

*त्यो गन्तव्यविहीनतामा रुमल्लिइरहेका यात्राहरूको बस्तीबीच*
*बेसुरमा गाइरहेका चराहरूको स्वर*
*नियतिदेखि अनभिज्ञ नाचिरहेका पुतलीका उमङ्ग*
*मिठासविहीन बहिरहेको हावा देखेर*
*मलाई बहुलाऊँबहुलाऊँ भइरहेथ्यो ।*

यो कविता कवि भूपी शेरचनको "भैरहवा" होइन । यो शङ्कर लामिछानेका निबन्धलाई हरफ भाँचेर राखेको निबन्ध होइन । यो टर्कीका बामे कवि नाजिम हिक्मतका कविताको अनुवाद होइन । यो कविता विराटनगर बस्ने युवा कवि सुमन पोखरेलको "कमैया बस्तीमा" शीर्षक कविताबाट उद्धृत अंश हो ।

भूपी शेरचन र नाजिम हिक्मत देब्रे ढल्कुवा कवि थिए । तिनले मानिसको नजिक पुगेको भावना अनुभूत गराउने कविता लेख्थे । कविहरू धेरै किसिमले कविता लेख्छन् । धेरैथरि विचारले लेख्छन् । तर ती जहिलेसम्म कविता लेख्छन्, कवि रहन्छन् । लेख्न सक्न छाडेपछि तिनले कि त गफ गर्छन् कि त अति जटिल वा अति प्रचारवादी कविता लेख्छन् । भूपी शेरचन र नाजिम हिक्मतको नाउँ मलाई बारम्बार आइरहन्छ । सुमनका यस सङ्कलनका कविताले मेरा एकाध मानक भत्काएका छन् । पहिला भनिहाल्छु अनि समीक्षाका केही शब्द लेख्छु ।

यी युवा कविका कविता पढेपछि लाग्यो प्रभावशाली कविता गर्ने कविहरू हल्ला र साहित्यिक मिडियाको परिवेशबाहिर पनि हुन्छन् । प्रचार गरेर नहिँड्ने कलमबाट पनि बलिया काव्यको सिर्जना भइरहेको हुन्छ । कविहरू खोजेर निकाल्नु पर्छ, प्लेटमा राखेर अगाडि राखिदिएमात्र पढ्ने बानी सकेसम्म छोड्नु पर्छ । तर मैले त्यो बानी छोडिन । यी कविताहरू मेरो अगाडि कविहरू कृष्णभूषण बल र मनोज न्यौपानेले फाटेर चस्चस् घोच्ने प्लास्टिकको फुटेको फाइलरूपी प्लेटमा ल्याएर राखेको पनि झन्डै एक वर्ष भएछ । त्यसबीचमा कैयौं हजार शब्दहरू लेखिसकेँछु । तर तिनको कवितामाथि अत्यन्त ईच्छा गरेपनि केही लेखिनछुको पछुतोले यसरी रुस्केँ ।

ग्रेगोरियन सम्बत् २००९ को मार्च महिनामा आगरामा भएको सार्क लेखकहरूको उनन्तीसौँ सम्मेलनमा ती सुमन कवि आइपुगे । शालीन व्यक्तित्व भएका, सिर्जनशीलतामा आनन्द र विश्वास समावेस गरेका ती कविले उनका एकै ठाउँका मित्र अर्का बलिया कवि मनु मन्जिलको अङ्ग्रेजी अनुवादमा सार्क कवि सम्मेलनमा आफ्ना कविता सुनाएर सुन्नेका मन जिते । अरू कविहरूको हुलमा मैले ती कवि सुमन पोखरेलसँगको सहयात्रा गरेँ । त्यस यात्राबाट अभिप्रेरित भएर लेखेका तिनले फेरि तीनवटा कविता पठाए । हामीले सँगै भ्रमण गरेको ताजमहल विषयको थियो एउटा कविता । ताजमहल कवि लक्ष्मीप्रसाद देवकोटाले लेखेको "शाहजहाँको ईच्छा"मा पढेपछि अब यसको विषयमा अरू नेपाली कविले लेखेको

पढ्दैँलाजस्तो लागेको थिएन। देवकोटाको यो "वियोगमिलनको क्रीडाभूमि" थियो जहाँ नित्य चल्दछ "प्रेमी प्राणहरूको बतास" । "सरिताको छ सागररोदन" जहाँ "रोई, रूहले सोध्दछ कोही, ए ती लुकेकी खोइ ? " जस्ता कण्ठै आएका उद्धरण राख्छु देवकोटाको कविताबाट । सुमन र हामीले देखेको यमुना जलमा मुरली बजेको आभाष थिएन । तर सुमनले त्यो विशाल रोमानी क्यानभासमा सहज निजत्व हालेर कविता लेखेछन् । देवकोटाको कवितापछि नेपाली युवा कविले लेखे,

*सारा यौवन*
*छातीमा एउटा प्रेमाकुल मुटु बोकेरै*
*हिँडिरहेको हुँ ।*

*फक्राएर मनलाई*
*प्रेमको ओत बनाऊँ लागेकै हो*
*अनुरागका गहिराइहरूमा डुबेर मन लफ्रक्क हुँदा*
*निचोरेर प्रेयमै पोखूँ भइरहेकै हो,*
*कहिल्यै नमेटिने एक चित्र*
*हृदयकै रङ्गले कोरूँ भइरहेकै हो ।*

– *"ताजमहल र मेरो प्रेम"*

रोमानी र आधुनिक मनको द्वैत चिन्ता आत्मस्वीकृतिमूलक छ । सुमन विशाल ताजमहलको प्रेमको कलेवरलाई आफूले अनुभव गरेको परिवेशभित्र राख्न लगाउँछन् उनको कविलाई। यो द्वैतता र आधुनिकताको कुरा गर्दा माथि उठाएको प्रसङ्गतिर एकपटक फर्किन्छु। मलाई सुमनको सहज आधुनिकताबोधले आकर्षित गर्‍यो । मैले यिनका कविताको यो सहज आधुनिकता र समयबोधलाई लिएर लेखेको लेखमा आदेश र शक्ति अनि विडम्बनालाई विषय

बनाएको थिएँ । कान्तिपुर (१३ भदौ २०६६) मा प्रकाशित त्यो लेखको एक खण्ड यहाँ उद्धृत गर्न उपयुक्त ठान्छु –

*"दाहिने नफर्क – देब्रे नसुत ।*
*भोकै नबस – केही पनि नखाओ ।*
*कपडा नलगाओ – नाङ्गै नहिँड ।*
*खुकुरी साथमा राख – हतियार छेउमा नराख ।*
*साँझैमा सुत – मध्यरातसम्म काम गर ।*
*झ्यालढोका खुल्लै राख – ढोकामा साँचो लगाओ ।*
*एकभन्दा बढी नहिँड – एक्लै नहिँड ।*
*आँखा खोलेर नहेर – चौबिसै घण्टा पहरा देओ । "*

*विराटनगरका युवा कवि सुमन पोखरेलको "आदेश" भन्ने यो कविता पढेपछि मलाई सातोरी भयो । जेन ध्यानमा प्रयोग हुने शब्द रहेछ यो सातोरी । यसलाई मैले झल्यास्स ज्ञान भनेर अनुवाद गरिआएको रहेछु । मलाई यो छोटो कविताले त्यही ज्ञान भयो । आदेशका विसङ्गत स्वरूपको ज्ञान राजधानीबाहिर बसेर लेख्ने यी सिर्जनशील कविलाई जस्तो हामीलाई के होला र । यी कविले आदेशका विसङ्गतिहरू अनि तिनमा रूमल्लिएर दिग्भ्रमित युवाहरूका दशा देखेका छन् । मलाई अर्थ खुलेका केही कुरा राख्न चाहन्छु ।*

… … …

*सातोरी भन्ने जापानी शब्दको जेनसँग जोडिएको अर्थ छ । हामीले सीधा जानेको अर्थले बुझेको भन्दा भिन्न, कुनै कुरामाथि ठोस विश्वास नगर्ने, शून्य मन राख्ने अवस्था रहेछ सातोरीले खोजेको कुरा । त्यस ज्ञानका पृष्ठभूमिमा कुनै खास रङ्ग र रूप हुँदैन, ती भन्छन् । चीनका ताओ गुरु लाओत्जुले धेरै अघि नै भने, आरम्भमा शब्द थिएनन् । बस्तुताबाट पछि शब्द निस्के । ज्ञान भनेको भँगेराले चारो उठाएजस्तो उठाइबस्नु पर्ने कुरा रहेछ । म पनि त्यत्तिकै शब्दका चारोहरू उठाएर ज्ञान टिपिरहँदोरहेछु । तर कवि सुमन पोखरेलले देखेजस्तो विसङ्गत इतिहास र समयले अलिक झस्केको रहेँछु आजकाल ।*

*यस कविताले अहिले नेपालको विसङ्गत चरित्र पनि देखाउँछ । मलाई सातोरी भएको खास कुरा त्यो रहेछ । अहिले आदेश दिने र लिनेहरूका विसङ्गतिभित्र यो नेपाल देशको इतिहास अल्मलिएको छ । युवाहरूले कसको आदेश लिने अनि के गर्ने ? अनि आदेश दिनेको उत्पत्ति उद्देश्य र गन्तव्य के हो ? यी कुनै कुराको पनि प्रष्ट उत्तर छैन । आदेश दिनेले ठान्छ मैले आदेश दिएपछि लिनेले मान्नै पर्छ । आदेश मान्नेका समस्या छन् उतातिर । एउटा अर्थ बुझेर आदेश मान्यो भने आदेश दिनेले अर्कै बोली तयार पारिसकेको हुन्छ । किन यसो गरिस् भनेर तुरुन्तै उसले समाउन सक्छ । आदेश पर्खेर बसेको बिचरा सीमान्तकृत मानिसका हातमा निर्णयको अधिकार हुँदैन । अहिले नेपालको विडम्बना भनेको आदेश दिनेले आफ्नो आकार जीवनभन्दा ठूलो देखाउने प्रयासको सिलसिला हो । ऊ सँस्थाको नाइके ठान्छ आफूलाई । त्यही कारणले ऊ आदेश दिन्छ । तर उसका विसङ्गत आदेशमा उसको निर्णय गर्न नसक्ने क्षमता प्रतिबिम्बित हुन्छ ।*

*सपना देख्नेहरूले धेरै आदेश दिँदैनन् । ती साझा चिन्ताका रचना गर्छन् । नेपाल सात सालमा राणा शासनबाट मुक्त भएपछि चेतना मुक्त भएको अनुभव गरेछन् सबैले । लेखकहरूका उत्तेजनाबाट देखिन्छ । कविहरू लक्ष्मीप्रसाद देवकोटा र सिद्धिचरण श्रेष्ठका कविता पढेको सम्झिन्छु । मेरो स्मृतिमा एकाध हरफहरू छन् । लेखक सम्मेलनहरूबाट फर्किंदा ती कविहरूले फरक फरक बखतमा लेखे । देवकोटाले "हामी उषासुत नयपाली" हौं र "विश्व गोल सदनका अंशियार हौं एक थाली" भने नेपालीलाई । अरू कुरामा आफ्नो राजनैतिक परिवेश लेखे । सिद्धिचरण श्रेष्ठले निर्णायक बोलीमा भने, "गिरिगह्वरले भिन्न भै अब, मनुज बस्नकै छैन सम्भव" । सपनाहरूले देखेका बाटाहरू भनेका काल्पनिकी हुन् । त्यसले आधुनिकताको बाटो खोल्छ । तर यस्ता सपना बाँडेर विपन्न मानिसलाई कतिसम्म राख्न चाहन्छौ ? हामी भ्रामक आदेश दिएर हिँड्नेहरूलाई प्रश्न गर्छौं ।*

... ... ...

*आदेश भन्नेबित्तिकै ती मानक हुन सक्तैनन् । आदेशहरू राज्य, राजनैतिक शक्तिहरू जोबाट आए पनि मानिसका अधिकारको सम्मान गर्दैनन् भने ती भ्रामक*

*हुन सक्छन् । कोही समूह र वर्गका हैकम चलाउन राज्यका संयन्त्र अनि दलहरूबाट पनि ती प्रयोग गरिन्छन् । सबैभन्दा ठूलो कुरा प्रजातान्त्रिक मूल्य हो, अधिकार बुझ्ने नरनारीको राज्यमा सर्वत्र उदय हुनु हो । "*

म सुमनको "कमैया बस्तीमा" शीर्षकको कविता र नेपाल र टर्कीका देब्रे ढल्कुवा कविहरू भूपी र नाजिम हिक्मतका कविताले बुझाएको आधुनिकताको थोरै चर्चा गर्न चाहन्छु । कवितामा हामीले खासै चर्चा नगरेको पक्षलाई यिनै युवा कविका प्रभावकारी कविताको छलफलको मौकामा यस छोटो परिचयमा उठाउन चाहन्छु ।

आधुनिकताका अनेकौं पाटा हुन्छन् । मैले बीस र तीसको दशकका कविहरूको आधुनिकताका समालोचनाहरूमा भूपी शेरचनका कवितालाई पनि समावेस गर्दै आएकोछु । प्रकाशित निबन्ध र समीक्षाहरूमा आफ्ना धारणा राखिआएको छु । उनका समकालीनहरूका कविता जटिल शैलीमा लेखिएका प्रयोगवादी रचना हुन् । तिनमा आधुनिकतालाई एक पृष्ठभूमिमा बसेको इतिहासका अभिव्यञ्जना, त्यसका अप्ठेरा र समस्यालाई भाषिक र प्रायोगिक लेखनको माध्यमबाट व्यक्त गरिन्छ भन्ने मेरो मान्यता हो । त्यो छलफललाई यहाँ दोहोऱ्याउन चाहन्न । तर भूपीका कविता प्रष्ट छन् । पृष्ठभूमिमा बसेको इतिहासको अवचेतन मनलाई ती ठाडै अर्थ्याउँछन् । तिनका वाचाल बिम्बहरू र उक्तिचातुर्यमा इतिहासको असहज अवस्था र जटिलता सोझै देखिन्छ । त्यस अर्थमा भूपी शेरचनको आधुनिकता वाह्य र आन्तरिक चरित्रलाई देखाउने चेतनाको आधुनिकता वा "मोडर्निज्म" हो । भूपी शेरचन इतिहासलाई माथिबाट हेर्नेले देखेको भविता र विपन्न वर्गले देखेको भविताको बीचको अन्तरलाई लिएर कविता लेख्छन् । ती विपन्न वर्गको काल्पनिकीलाई उनका कविताको विडम्बना रचनाको माध्यम बनाउँछन् । उनका प्रायश: लामा कविता र कतिपय छोटा कविताहरूमा विपन्न मानिसको काल्पनिकीमा आउने आधुनिकताका चाहना र त्यो पुरा नहुने हुँदा त्यसबाट निस्केको विडम्बनाको चित्रण हुन्छ ।

यो विषयमा वैकल्पिक आधुनिकताको चेतनाको छलफल गरेका छन् विद्वान र कविहरूले । मैले अनेकौं छलफलहरू छानेको छु । तर यहाँ एउटामात्र प्रस्तुत गर्न चाहन्छु । यिनीहरूका विचार आधुनिकताका हामीले बुझिआएका विचारभन्दा अलिक फरक छन् । मार्शल बर्मनको "खँदिलोजति सबै त्यसै बिलाउँछ" भन्ने आलेखमा व्यक्त विचारसँग टर्कीका कवि नाजिम हिक्मतको आधुनिकताको विचार जोड्दछिन् मारिअन् अइगुर । "नाजिम हिक्मतको विकासको आधुनिकता" भन्ने जर्नल अफ् मोडर्न लिटरेचर (३०.४, गृष्म २००७) मा प्रकाशित लेखमा हिक्मतको काव्यलाई लिइएको छ । म कवि भूपी शेरचनसँग उनलाई यस्तै कविताको आधार लिएर जोड्छु ।

विपन्न मानिसका चेतना र चाहनाका अभिव्यक्तिलाई अविकसित अवस्थाको आधुनिकता भन्छन् बर्मन । असमान आर्थिक सम्बन्धहरूलाई यसको आधार मान्छन् ती । नाजिम हिक्मतको एक सरल कविताको विश्लेषण गर्दै बर्मन् भन्छन्, अविकसित अवस्थाको आधुनिकतासँग अभाव जोडिएको हुन्छ । अनि यस्तो आधुनिकताले अर्को किसिमको आधुनिकताको परिकल्पना गर्छ । तर विपन्न वर्गले केवल काल्पनिकीले आफ्ना सपना पूरा गर्न सक्तैनन् । जतिसुकै गतिशील भए पनि तिनको अवस्था बद्लिँदैन । काल्पनिकीले खाने कुरा दिँदैन । तर आधुनिकताका ठूलै अनुहार मात्र हुन्छन् भन्न सकिँदैन । यो कुरा देखाउन नाजिम हिक्मतले एउटा रेलयात्राको साधारण विषयमाथि कविता लेखेका छन् । त्यो भौतिक संरचनाको यात्रा हो । त्यसभित्रबाट आधुनिकताका सम्भावना खुल्छन् भन्ने परिकल्पना बीसौं शताब्दीको चालीसका दशकतिरको कमालको तुर्की राष्ट्रवादी चिन्तनको प्रतिबिम्ब हो । कवि हिक्मत आधुनिकताको काल्पनिकीभित्र आधुनिकताकै विरोधाभाष देख्छन् ।

भूपी शेरचनका, हिक्मतका जस्ता सरल कविताभित्र आधुनिकताका कल्पनाभित्रका विरोधाभाष चित्रण गरिएका हुन्छन् । नयाँ सडक होस् कि, हामी नेपालीका चालचलनको चित्र होस् कि, विदेशी पर्यटक आउन थालेपछिको काठमान्डौ होस् कि, वा कुनै नागर सभ्यताभित्र यसै उठेका कलिला हातहरूको नमस्ते होस् भूपी

शेरचनको कवितामा आधुनिकताका सहजवृत्तभित्र यसका जटिल विरोधाभाषको चित्रण भएको हुन्छ । यिनका समकालीन कविहरूका जटिल आधुनिक काव्यिक संरचनामा आधुनिकताको चित्रण रूप भएको छ । ज्ञान, युद्ध र भयका अनि विखण्डनका बिम्बहरूले बनिएको तिनका समकालीन कविहरूको आधुनिकताभन्दा तिनको सरल काव्यसंरचनाको आधुनिकता भिन्न छ ।

कवि सुमन पोखरेलको उमेरका युवा कविहरूको युगलाई जटिल त भन्नै पर्छ तर हिजो जटिलतालाई लिएर उच्चआधुनिकताको शैलीमा कविता लेख्नेले त्यो जटिलताको शिकार भएको देखाएर व्यक्तिलाई रोमानी उच्चाइ दिएको कुरा देख्न सकिन्छ । आधुनिक वा "मोडर्निष्ट" भनिने काव्य र चित्रकलाको यो विशेषता हो । सुमनका कवितामा जटिलताका क्षणहरूको चित्रणमा वैकल्पिक आधुनिकता देख्न सकिन्छ । सहज उक्तिको पछिल्तिर खोज गर्ने र खोजिएका वस्तुका सम्बन्धहरूमा पुरा नभएको चाहना र एक कुनै वाञ्छित लक्षको खोजी नै कविता भएकोछ । कविपात्र बोल्छ–

*साँझको एउटा रुमानी र वैरागलाग्दो आकाशमुनि*
*मैले हेर्दाहेर्दै बाटाहरू आफ्नै सुरमा कतै गइरहे,*
*मैले भोग्दा भोग्दै क्षणहरू विक्षिप्त र निराश पनि भइरहे ।*

*त्यस क्षणमा*
*केही सुस्केराहरू अन्यौलमा परिरहे ।*

–*"आगाले भिजेको आकाश"*

त्यो कविपात्रको उक्ति सामर्थ्य नै सिर्जनाले बनिएको छ । उसको खोजीमा जेन चित्रकार र कविकाजस्ता सहज र वोधगम्य बिम्बहरूका नाटकीय खेलहरू हुन्छन् । त्यो खोजमा परमआनन्द बुझाउने क्षणहरूका आभाष पाइन्छन् । यस्ता क्षणहरू जसको प्रयोग गर्दा कविपात्र विचलनमा परेको छैन । त्यहाँ निजत्व छ तर

त्यो निजत्व एक खोजीको रूपक भएकोछ । त्यसकोपछिल्तिर एउटा चाहनाको आकाश छ । रहरहरूका निर्वोधपनाभित्र वोधगम्य नियतिको अधिचेतना छ । वैकल्पिक आधुनिकतालाई यसरी चाहनाका वोधगम्य रूपकहरूबाट व्यक्त गरिन्छ –

*रहरहरू निर्वोध, निर्भय छन् ।*

*चकचक गर्छन् मनको भीरमा*
*बेस्सरी हल्लाउँछन् मनको हाँगामा चढेर*
*मनको भाँच्चिएको टुक्राको घोडा चढ्छन्*
*उफ्रन्छन् मनै थर्काउने गरी कहिले*
*कहिले फुटाउँछन् मनको बिर्को र छताछुल्ल पोखिदिन्छन् भावनाहरू ।*

*रमाइलो लाग्छ रहरहरूले छरेका मनका टुक्रा बटुलेर जोडिरहन*
*मेरी सानी छोरीले भत्काएका उसका खेलौनाहरू जोडेजस्तो ।*

– *"रहर"*

त्यो रहरको अवोधपन बुझिने विडम्बना पछिल्तिरको यथार्थिक धरातलमा वैकल्पिक आधुनिकता बुझिन्छ । नाजिम हिक्मत र भूपी शेरचनका कवितामा राज्य र समाजले आधुनिकता भनी रटान गरेका अनि धेरै चर्चामा आउन थालेका आधुनिकताका उक्ति र रूपकहरूको एक असम्पृक्त स्वरूप देखिन्छ । त्यहाँ गाम्भीर्य छ । यस्तै गाम्भीर्य सुमनको कविले रहरहरूको पछिल्तिरको यथार्थ बोल्दा अर्को कवितामा देखाउँछ–

*नियतिले जीवनको छेवैबाट हाँसो चोरेर दौडियो*
*मनको उज्यालो डुब्दैगरेको हेरेर*
*आँखाहरू साँझजस्तै निरिह उभिइरहे*
*उम्किएको खुसी समातेर फर्काउने असफल प्रयासमा मनले युग बितायो ।*

– *"जिजीविषा"*

सुमनका काव्यमा नागर सभ्यताको विडम्बना र सहज र सरल जीवनका लयको द्वन्द्वात्मक सम्बन्ध छ । सन् साठी र सत्तरीको दशकमा काठमान्डौ भनेर चिनिने नगरलाई आधुनिकताको उदात्त रूपकको रूपमा चित्रण गर्ने कविहरूले त्यो वैकल्पिक आधुनिकता, त्यो विकासका भाषाहरू पछिल्तिर बसेको देश र समाजको यथार्थलाई नै अनेकौं रूप र बिम्बहरूमा चित्रण गरेका हुन् भन्ने आधारहरू धेरै देख्न सकिन्छ । कविले नगरलाई स्वीकार गर्दा त्यसको भयानक स्वरूपको चित्रण गरेर राख्तैन । त्यसका पश्चिमी नागर सभ्यताका रूपकहरूलाई लिएर वर्णन हुँदैन सुमन र आजका नेपाली कविका रचनामा । त्यो फ्रान्सेली चार्ल्स बोदलेयरको आधुनिक प्यारिस होइन, टीएस् एलिअट्को लण्डन होइन, सेमुअल बेकेटको विसङ्गत नगर होइन अनि जेम्स ज्वायसको आधुनिक युलिसस्को विसङ्गत यात्राको नागरखण्ड होइन । त्यो एउटा विकासजनिन बाध्यता र रहरको भोगिएको रूपक हो । कविपात्र भन्छ,

*म*
*आफूलाई र यस सहरलाई एकै दृष्टिपटलमा देखिरहेको छु ।*

*... ... ... ... ... ... ... ... ...*
*... ... ... ... ... ... ... ... ...*
*... ... ... ... ... ... ... ... ...*
*... ... ... ... ... ... ... ... ...*

*यस सहरका धूला र धूँवालाई मैले घरसम्म ल्याएर*
*अनुहार र लुगासँगै धोएको छु,*
*यसका कर्कश स्वरहरूलाई टिपेर ल्याई*
*केलाएर आफ्ना गीतमा कुँदेको छु,*
*यसका विक्षिप्त दृश्यहरू बटुलेर आफ्ना कवितालाई सिँगारेको छु,*
*यसकै सुस्केरा उनेर आफ्नो जीवनको धुन बुनेको छु ।*

*– "यो सहर कसको हो ? "*

जर्मन कवि हान्च उलि्रख त्राईखेलको कविता यो "सहर कसको हो ? "को प्रतिक्रियास्वरुप लेखिएको कविता भनी स्वीकृत यो कविताले मैले माथि भनेको छलफललाई एउटा अर्को आधार दिन्छ। पश्चिमी नागर सभ्यताको आधुनिकतामाथिका प्रतिक्रियाजन्य काव्यहरूले हाम्रा र यतातिर दक्षिण एसियाली भेकका केही दशकअघिका कवितालाई प्रभाव पारेको देखियो ।

अबको वैकल्पिक आधुनिकताको चरित्र सांवादिक छ । यो सांवादिक चरित्रले अनेकौँ खेल गर्न सक्छ। आधुनिकता उत्तरका पश्चिमी र भूमण्डलीय चरित्रहरूलाई लिएर उत्तरआधुनिक चेतना भनेर ठोकुवा गर्न सक्छ। उत्तरआधुनिकता स्थायी चेतनाभन्दा पनि एक अस्थिर अवस्था हो। त्यो अनुभूत आधुनिकताको गतिशील रूपक हो। सुमनको नागरीय चेतनालाई कुनै समीक्षकले उत्तरआधुनिकता भनेर ठोकुवा गर्छ भने पनि केही छैन । तर मूलत: सुमनको काव्यमा वैकल्पिक आधुनिकताका आधारहरू बलिया छन् । त्यही अर्थमा उनको काव्यलाई आजका काठमान्डौ बाहिर बसेर लेख्ने सिर्जनशील कविहरूको वैकल्पिक उत्तरआधुनिकताको रूपक हो भन्न पनि सकिन्छ । त्यस उत्तरआधुनिकतामा देखिने अस्थिर चरित्रहरू अनुभूतिजन्य छन् । वितृष्णाका क्षणहरू भोगिएका छन् । तिनका रूपहरू एकलचरित्रका छैनन् । तिनमा विसङ्गतले पनि प्रगीतात्मक चेतना बोकेको हुन्छ । तिनमा देशमा सबैले रटना गरेको आधुनिकताकाभन्दा भिन्न वैकल्पिक स्वरूपहरू छन् ।

वैकल्पिक आधुनिकता र उत्तरआधुनिकताका चरित्र र त्यसको हाम्रा सिर्जनशील साहित्यकार, सङ्गीतकार र चित्रकारहरूले कसरी प्रयोग गर्दै आएका छन् भनी हेर्ने अध्ययनको क्रममा रहेको छँदो मैले सुमनका कविता पढ्ने अवसर पाएको हुनाले यस परिचयमा त्यसको उठानमात्र गरेको हुँ । सुमन पोखरेलका कवितालाई हेर्ने कोणहरू भौगोलिक र स्थानगत छन्, वैचारिक र भावगत छन् अनि तिनका कवितामा व्याप्त मानव अभिव्यञ्जनालाई मुख्य स्पन्दनको रूपमा नमानी कुनै पनि वैचारिक छलफलले केही अर्थ राख्तैनन् भन्ने आफ्नो

दृष्टिकोण पछिल्ला काव्यसमीक्षासम्मत भएको कुरामा मेरो विश्वास छ । सुमनका कविताले अहिले लेख्ने अरू पनि कविहरूका काव्यसँग मिल्ने धेरै चरित्रहरू देखाएको छ । मैले देखेको छु । एउटा उद्धरण राखेर छलफल टुङ्ग्याउँछु । त्यो आफैं वाचाल छ । छलफलका पनि सीमान्त चरित्र हुन्छन् । अधिकविता यसरी फुर्छ –

*समयले वीभत्सरसको नाटकमा नुहाइरहेको बेला*
*कसरी जन्मियोस्, सुकोमल युगको कविता !*

*अविवेकको हन्डी टाउकामा ओढेर*
*छेक्न सकिँदैन अनियन्त्रित बगेको अव्यवस्थाको बौलाहा बाढीलाई,*
*निर्लज्जता र मुर्ख्याँइँ चपाएजस्तो सजिलो छैन*
*भत्किएको समयका टुक्राहरू चपाउनलाई ।*

*यस्तोमा फेरि एक विदीर्ण कालखण्डको प्रलाप लेखिएला बरु,*
*उल्लासको मिठासले भिजेको कविता केही गरी फुरिरहेको छैन ।*
*मलाई,*
*जीवनमय उमङ्गहरूको धुनमा नाचिरहेको युगको कविता लेख्ने मन छ ।*

– *"कविता फुरिरहेको छैन - २"*

– – – ० – – –

**काठमान्डौ, मन्डिखाटार**
**असोज, २०६६**

# कविताक्रम


| | |
|---|---|
| केटाकेटी | १ |
| गर्मी | ३ |
| रुख – १ | ६ |
| रुख – २ | ८ |
| बिदा हुँदाहुँदै | ११ |
| हरेक बिहान | १४ |
| खोरम्पा | १५ |
| साँझको घाम र जूनको कथा | १७ |
| निर्णय गर्नुअघि | १९ |
| काठमाण्डौ ओर्लेपछि | २१ |
| कमैया बस्तीमा | २३ |
| नदी बोक्ने गाउँमा | २५ |
| विपर्यास | २७ |
| भरिया | २९ |
| बिदा हुन्नँ | ३१ |
| आगाले भिजेको आकाश | ३३ |

| | |
|---|---|
| जिन्दगी | ३६ |
| रहर | ३७ |
| जिजीविषा | ३९ |
| ठाडो उभेको आकाश | ४१ |
| आकाशबाट | ४३ |
| पुनरागमन | ४५ |
| कार्यालय | ४६ |
| यात्रामा निस्किँदै | ४७ |
| पिलो | ४९ |
| आदेश | ५२ |
| ढाका | ५३ |
| लोडसेडिङ | ५६ |
| ह्याङ्ओभर | ५७ |
| तिमी जसरी छ्यौ | ५९ |
| एक पुष्पवीजको आह्वान | ६२ |
| यो सहर कसको हो ? | ६३ |
| सपना नदेखूँ | ६७ |
| कविता फुरिरहेको छैन – १ | ६९ |
| कविता फुरिरहेको छैन – २ | ७३ |
| व्यस्तता | ७५ |
| बर्सातमा बुद्धको मूर्ति सामु | ७७ |
| बैँसभरि नबुझेको कुरा | ७९ |
| मनको गीत | ८१ |
| जीवनसँगको जम्काभेटमा | ८७ |
| मध्यरात सडकमा | ८९ |
| ताजमहल र मेरो प्रेम | ९१ |

# केटाकेटी

टिप्न खोजे मात्र भने पनि
तिनका कोमल हातमा आफैँ सरिदिन्छ फूल हाँगाबाट,
तिनका ससाना पाउबाट टेकिए
आजीवन आफैँलाई धिक्कार्छ काँढा ।

सोचीसोची छानिएर
सुकोमल हल्का भएर बस्छ
सपना पनि तिनका आँखामा ।

तिनका ओठमा बसेपछि
उच्चारण गर्दै डर लाग्ने शब्द पनि
तोते भएर निस्कन्छन् ।

चराहरूलाई जिस्क्याउँदै कलकल हाँसिरहेको पहाडी नदी
तिनको हाँसो सुनेपछि
आफ्नो घमन्डमा खेद गर्दै चुपचाप मदेस झर्छ ।

खेल्दाखेल्दै कतै ती लडिहाले भने,
कतिखेर उठेर फेरि अर्को कौतूहल खेल्न थाले
तिनको चकचकको रचनात्मकतामा लठ्ठिएको प्रकृतिले समेत पत्तो पाउँदैन ।
नजानी लडे भनेर सायद,
भुइँले धेरजसो त चोट पनि लगाउँदैन ।

तिनको मुस्कानको निश्छलता
युगौँको अभ्यासले पनि अनुकरण गर्न सकेनन् कुनै फूलले ।
विश्वभरका अनेकन दिग्गज सङ्गीतकारसँगको सदियौँको सङ्गतमा पनि
कुनै वाद्ययन्त्रले सिक्न जानेन तिनको बोलीको मधुरता ।

तिनले फुटाए भने फुट्दाफुट्दै पनि हाँसिदिन्छ गमला,
तिनका निष्कपट हातबाट पोखिन पाउँदा
हर्षले उफ्रिउफ्रि छरिन्छन् जेसुकै पनि,
तिनीहरूसँग खेल्दाको आनन्दमा
आफू रङ्गविहीन भएको पनि बिर्सन्छ पानी खुसीले ।

सोच्दछु,
कतै सृष्टिले अलि बढी नै अन्याय त गरेन ?
बिना युद्ध सबैलाई पराजित गर्ने सामर्थ्यसाथ
जीवनको सर्वाधिक सुन्दर जुन क्षण खेलाएर निमग्न छन् केटाकेटीहरू,
त्यस स्वर्णिम आनन्दको वोध होउन्जेलमा
भागिसकेको हुनेछ त्यो तिनीहरूबाट
कहिल्यै नफर्कने गरी ।

*असार २०६१, वीरगञ्ज*

# गर्मी

गर्मी आफ्नो उत्कर्षबाट अझ मास्तिर उक्लँदो छ,
मानौँ कसम खाएको छ तमाम थर्मामिटरहरू नफुटाइकन तल नओर्लिने ।

हावा यता छिर्न मन गरिरहेको छैन,
बादललाई लिएर गएको छ कतै हनिमुन मनाउन
त्यसैले पानी पनि पर्न सकिरहेको छैन ।

सूर्य भएभरको शक्ति लगाएर घाम बर्साइरहेको छ,
लादिरहेछ निर्ममतापूर्वक निरीह जीवनहरूमाथि आफ्नो एकोहोरो शासन ।

मान्छेको शरीर र मस्तिष्कको सामञ्जस्यलाई भत्काइदिएको छ गर्मीले ।
सिमसार भएको छ मान्छेको शरीर ।
बौलाहा बाढीले जस्तो एकछत्त भिजाएको छ सम्पूर्ण शरीरलाई पसिनाले ।

उसले छुट्ट्याउन सकेको छैन छाला र रौँ,
र मान्छेको विचारलाई टाउकादेखि बगाउँदै पैतालासम्म पुऱ्याइदिएको छ ।

पसिनाले तानेर जिउमै लपक्क टाँसिदिएको छ
करैले लगाउनुपरेका लुगाहरू पनि ।
आजीवन अभिनयरत मान्छे
गाली गर्दो छ कपडाको आविस्कारकलाई ।

झ्यालहरू भएर पनि नभएझैँ छन्
कुनै असफल राष्ट्रको सरकारझैँ ।
पर्दाहरू हल्लिऊँ कि नहल्लिऊँ भनेर अलमल्ल छन् ।

भित्ताहरू नभएको वैमनष्यको तातो फ्याँक्दै सिँगौरी खेल्दैछन्
आपसमा जुधौँझैँ गरेर ।
कोठा आफैँमा बौलाएको छ आफैँभित्रको ताप खप्न नसकेर ।
ओछ्यान तावाले झैँ राप फ्याँक्दो छ,
उठ्दै गरेको मान्छेको जिउमा टाँसिएर भाग्न खोज्दो छ पसिनाले भिजेको तन्ना ।

सिलिङ्पङ्खा आजित छ अधिकारविहीन नाम मात्रको कुनै निमित्त हाकिमजस्तै
उँधोमुन्टो झुन्डिएर निरन्तर हप्काइरहँदा पनि गर्मीले टेरपुच्छर नलगाएकामा ।
टाउको निहुर्‍याएर अगाडि पर्ने जोसुकैको गाली सुन्दै घुमिरहेछ टेबुल पङ्खा
सरकारी अफिसको कुनै श्रेणीविहीन फाजिल कर्मचारीजस्तै ।

बिजुली गएको छ योजनाकारहरूका बैङ्कखातामा लुक्न
र बच्चो रुँदैछ आमाको दूध चुस्न नसकेर गर्मीले ।
स्वास्नीमाथि खन्याउँदैछ लोग्ने अनाहक
असफल योजना र गर्मीको पारो फुटेर निस्किएको असरविहीन तातो झोँकलाई ।
स्वास्नीको लागि त्यो झोँक उसले भोगिरहेको गर्मीभन्दा ज्यादा तातो छैन ।

उन्मत्त उम्लिरहेछ बाटाको पिच
मान्छेको धैर्य चर्काउने गरी थपिरहेछ हावामा तातो ।

अस्तव्यस्त गफिफइरहेछन्
खेत रोप्न नपाएर फुर्सद पाएका आइमाईहरू रुखमुनि थुप्रिएर ।
छेउमा बाँधेको बहर गोरु जान्न उत्सुक छ,
आइमाईहरूलाई जाडोमा मात्र लाज लाग्दोरहेछ कि कसो भनेर ।
सम्भ्रान्त भनाउँदा आइमाईहरूका आफ्नै ऐनामा सीमित केही रहस्यहरू पनि
द्रुततर गतिमा सार्वजनिक भइरहेछन् गर्मीको निहुँमा ।

पसिनाको चिपचिपाहटमा अल्झिएका छन् सबैका सीप र जाँगरहरू ।
प्रेमी–प्रेमिकाहरू एकअर्कालाई टाढैबाट हेरेर चित्त बुझाउँदै छन्,
तमाम मोह र आशक्तिभन्दा ज्यादा शक्तिशाली भएर उभिएको छ
उनीहरूका बीचमा यो प्रचण्ड गर्मीको विकर्षण ।

सूर्य आफ्नो वर्चस्व देखाउन तल्लिन छ अझै
र एकोहोरो चढ्दो छ गर्मीको घमण्ड ।

यति हुँदाहुँदै पनि विश्वस्त छन् यहाँ बाँचिरहेका एकएक कणहरू
गर्मीलाई पछारेर अवश्य आउनेछ शीतलता भनेर ।

अनुभव साक्षी छ,
निर्मम शासन गरेर कोही यहाँ धेरैबेर टिक्न सक्दैन ।

*जेठ २०६१, वीरगञ्ज*

## रुख – १

म हेरिरहेको छु रुखलाई ।

रुख टुक्राटुक्रामा बाँच्दैन ।
जबसम्म बाँच्छ,
जीवनलाई सम्पूर्णतामा आफूमा समाहित गरेर बाँच्छ ।

घाममा घाम खान पाए पुग्यो
पानीमा पानीसँग भिज्न पाए भयो
आफ्नो आकारभन्दा ठूलो छैन उसको भोक ।

हावामा, हावासँगै हल्लिन्छ
जून आए जूनसँगै रम्छ,
नआए अँध्यारासँगै खेल्छ ।

उसलाई जराभन्दा टाढाको केही भेट्नु छैन
जरा उखेलिएर आकाशमा उडेको कल्पना गर्दैन रुख ।
जरा जति उभिने माटो पाए चाहिँदैन उसलाई केही
हाँगा र पातभन्दा ज्यादा सपना देख्दैन रुख
छर्दैन रहरहरूलाई आफ्नो सामर्थ्यभन्दा टाढा पुग्नेगरी ।

बाँच्नुको दौडधुपबाट लखतरान
मन, मस्तिष्क र शरीर सबैतिर थकित म
थ्याच्च बसेर भुइँमा
जून उदाउँदो आकाशको पृष्ठभूमिमा हेरिरहेछु रुखलाई ।

रुख उभिइरहेछ निर्धक्क, निस्फिक्रि ।

*भदौ २०६१, वीरगञ्ज*

## रुख – २

हाँगामा चढेर प्रदर्शित गरे आफूलाई
र बैठक र मन्दिर चहार्दै हराए फूलहरू ।
कुनै आकारमा अटाउन नसकेर बेठेगान दौडिरहे नदीहरू ।
असङ्ख्य गन्तव्य बोकेर जताततै बराल्लिइरहे बाटाहरू ।

म भने उही माटालाई समाएर
उभिइरहेछु निरन्तर ।

कति युगल मेरो फेदमा बसेर
कल्पनाको संसार उडी रमाए,
ढाकर बिसाएर कति भरियाहरू
मेरो आडमा रहरको जीवनजस्तै सपना निदाए ।
केटाकेटीहरू हाँगाहाँगामा उफ्रिएर
बाल्यकाल सम्झाउने चिनो बोकी हुर्किएर गए ।

बेतोडले कुदेका हावाका झुन्डहरू
मेरा पातमा बसी एक छिन साउती मारेर आकाश खेद्दै क्षितिजतिर दौडिए,
बचेराहरू मेरै हाँगामा काढिएर
पँखेटा उमारी जीवन बोकेर उडे,
थकानले आफैँलाई बिर्सी आइपुगेका यात्री पनि
मेरो छायामा बौरिए र आफूलाई लिएर गए ।

कतिपल्ट दिनभरि हिर्काएर घामले
उभिएको ठाउँबाट खेद्न खोजिरह्यो मलाई,
पानीले चुटेर मलाई नै पानी बनाई बगाउन खोज्यो,
आँधीले ठेलेर उडाउने चेष्टा गर्दै
कतै पुर्‍याएर आफैँजस्तै बिलाइदिन खोज्यो ।

इन्द्रेनी बोकेका किरणहरू पनि अडिएनन्,
नौमती बाजा र एकोहोरो शङ्खका आवाजहरू पनि
पालैपालो आए र कतै गइरहे ।

घरबाट निस्कनुअघि चार दिन परको बटुवा
मेरो छहारीमा एकपल्ट सुस्ताएर हिँड्ने सोच्दछ,
मेरा हाँगामा चल्ला काढ्ने निधो गरेर
चराहरू वसन्त बोलाउँछन्,
कतै हराइयो भने यहीँ भेट्ने भनेर बाटाहरू छुट्टिन्छन्,
आँधीले खेद्दै ल्याएका धुला र कसिङ्गरहरू
मेरा पातमा छेलिएर थकाइ मार्छन् ।
बर्षाको कुटाइले पानी भएको माटो
मेरा जरा समाएर आफ्नो अस्तित्वमा फर्कन्छ ।

बिजुलीले आँखै बिर्साउने गरी नाचेर लोभ्याउन खोजिरहे,
चट्याङहरूले तर्साएझैं गरिरहे,
बादलहरूले पानी छ्याप्दै ब्यूँझाउन खोजेझैं गरिरहे ।

हिँडू लागेन
यहाँबाट कहिल्यै मलाई ।

*फागुन २०६३, विराटनगर*

# बिदा हुँदाहुँदै

तमाम झ्यालहरूले हेरिरहेजस्तो पनि लागिरहेकै हो
तमाम भित्ताहरूले सुनिरहेजस्तो पनि लागिरहेकै हो
त्यस बेला
ती सडक र पेटीहरूले बोलिरहेजस्तो पनि लागिरहेकै हो
आफ्ना आवरणहरू खोलिरहेजस्तो पनि लागिरहेकै हो ।

मैले हिँडिरहे पनि
मैले अडिरहे पनि
तमाम
वृक्ष र चराहरूले
आकाश र ताराहरूले
वक्ष र चुराहरूले
देखिरहेजस्तो पनि लागिरहेकै हो ।

त्यो द्विविधामा
अडूँ कि बढूँको
उत्रिऊँ कि चढूँको,
तमाम बाटाहरू अगम्य लागिरहेको पनि हो ।

केही फुटेका
केही टुटेका
केही चुक्किएका
केही आकाङ्क्षाहरू पढेको पनि हुँ
परिवेशहरूका अनुहारमा ।

केही वाक्यहरूलाई छामेको पनि हुँ
केही शब्दहरूलाई चुमेको पनि हुँ ।

आँखाहरूले बाटो रोके त पन्छाउनु पनि
मुटुहरूले बाटो छेके के गर्नु ?
त्यसैले
ती झ्याल र भित्ताहरूलाई
नदेखेझैँ गरेको पनि हुँ ।

त्यस बेला मेराविरुद्ध षडयन्त्र भइरहेझैँ पनि लागिरहेकै हो,
मेरा शब्दहरूमा मलाई प्रहार गर्ने सन्यन्त्र खोजिरहेझैँ पनि लागिरहेकै हो ।

ती आँखा र हेराइहरूले
भावनाका फूलहरूको एउटा नदी कतै पठाइरहेझैँ पनि लागिरहेकै हो ।
कल्पनाका सुगन्धहरूको एउटा पहाड कहीँ उक्साइरहेझैँ पनि लागिरहेकै हो ।

त्यस बेला, मेरो मन मायाको आनन्दमा निदाइरहेझैँ पनि लागिरहेकै हो ।
जीवनका संवेदनशील हाँगाहरू भाँच्दै
कुनै नीरस मोहले मलाई लिएर कतै गइरहेझैँ पनि लागिरहेकै हो ।

ती क्षणहरूमा
मेरो मानस भोगाइका मरुभूमिमै सौन्दर्य फुलाउने आँट लिएर
बाँच्नको लागि ब्यूँझिरहेझैँ पनि लागिरहेकै हो ।

म अहिले जुन ठाउँमा छु
नठान्नु होला
यहाँ म पैह्रोझैँ बगेर पुगेको हुँ
वा बादलझैँ बाफिएर ।

आफ्नो कोमल मनमा
समयको तरवार रोपी
त्यसैको बिँडमा समातेर उक्लिआएको हुँ ।

कसैले सम्झाए पनि नसम्झाए पनि
दुखिरहन्छ जीवनको एक अंश
मेरो छाती समाएर ।

*असार २०५६, भोजपुर*

# हरेक बिहान

हरेक बिहान
रक्ताम्य खबरहरूसँगै ब्यूँझन्छु
र सशङ्कित हुँदै छाम्दछु आफूलाई
आफैं हो कि हैन भनेर ।

कृतज्ञता व्यक्त गर्दछु
आफ्नो एकमात्र संरक्षकलाई
"धन्य ईश्वर !
हिजो मर्ने र मारिनेहरूको सूचीमा
मेरो नाम छैन " ।

*साउन २०६०, नेपालगञ्ज*

# खोरम्पा *

मेला लागिरहेथ्यो कुहिराहरूको
त्यो डाँडा र त्यसको वरिपरि ।

मैले बुझिनँ,
किन मेला लागेथ्यो त्यस ठाउँमा
घामका किरणहरूको ओत लागेर
ती कुहिराहरूको ।

मैले सोधिनँ पनि कसैलाई,
किन चलिरहेछ हावा यसरी
कुहिरालाई खेद्दै ।

बरु सोध्न मन लागेथ्यो
किन खोरम्पा त्यति अप्ठ्यारो भएर बन्यो,
तर सोधिनँ त्यो पनि ।

त्यो अप्ठ्यारो ठाउँमा
त्यो विकट अवस्थितिमा
बस्ती किन बस्यो जीवनहरूको ?

जहाँ यात्राको लागि निस्कन्छ जीवन
आफैँले थाह नपाएको लक्ष्य लिएर
र हिँडिरहन्छ अभावहरूले भरिपूर्ण भएर
कतै हुँदै नभएको गन्तव्यतिर ।

अनि, अन्त्य हुन्छ थाहै नपाई कसैले
कहिले भीरबाट लडेर
कहिले खोलामा बगेर
कहिले ढुङ्गाले किचिएर ।

मैले सोधिनँ,
किन सकिने गर्छ जीवन त्यसरी ।

खोरम्पा
अद्यापि झुन्डिरहेछ बाँकी जीवनहरूको बस्ती बोकेर त्यही ठाउँमा ।

कारण सोधिनँ मैले त्यो निरन्तर झुन्डयाइको ।
यसैले हुनसक्छ,
सायद,
सहज मृत्युभन्दा असहज जीवन नै जीवनमय हुन्छ ।

*साउन २०५७, भोजपुर*

*( * खोरम्पा - भोजपुर जिल्ला, हसनपुर गा.बि.स. वार्ड नं. ९ मा पर्ने एउटा विकट बस्ती )*

# साँझको घाम र जूनको कथा

बाटो आउँछ कतैबाट
र पर्खिरहेको चौतारीको वास्तै नगरी
गइरहन्छ एक्लै अगाडि कताकता
नलिई साथ चौतारीलाई ।

जहींतहीं यस्तै छ
हरेक युगमा यस्तै नै छ ।

आजसम्म कुनै चौतारीलाई साथ लिएर गएन बाटाले ।

बाटो आयो
आइरह्यो
हिँडिरह्यो
कतै गइरह्यो
परदेसी जसरी एक्लै ।

चौतारी पर्खिरह्यो
हेरिरह्यो
रोइरह्यो
निस्ताइरह्यो
गाउँबेँसी जसरी एक्लै ।

न बाटो अल्झिन सक्यो
चौतारीको मायामा कतै
न चौतारी पछि लाग्न सक्यो बाटाको मोहनीमा कतै ।

घामले आज साँझ पनि
यही कथा भन्यो
र बाटो लाग्यो ।

जून भने अझै पछ्याउँदै छ उसैलाई ।

*पुस २०५७, भोजपुर*

# निर्णय गर्नुअघि

बहुलाऊँ म कसकसको मस्तिष्कमा ?
सोधूँ कसलाई ?

एकोहोरो उफ्रिरहूँ धारो झरेको ठाउँबाट पानीका कण उफ्रिएझैँ
कि
बिलकुल स्थिर रहूँ त्यही धारामुनिको ढुङ्गाजस्तो ?
जो निरन्तरै भए पनि तरल चुटाइले झकझक्याउँदा
रत्तीभर चट्पटाउँदैन ।

कुन आँखालाई हेरूँ,
नितान्त तर्कहीन उत्तर पाउनका लागि ?
वा
कसैलाई नसोधिनुपर्ने प्रश्न सबैलाई सोधिरहूँ
कि नसोधिएको प्रश्नको जवाफ दिइरहूँ आकाशतिर फर्किएर ?

बाँच्नको लागि लगातार बहुलाइरहनुपर्ने यस परिवेशमा
कुन साइत रोजूँ बहुलाउन ?

मैले सोधिनँ कुनै लप्सीको गेडाजस्तो गुदीविहीन टाउकालाई
साइत देखाइनँ मैले कुनै टाँकीको चिउलाजस्तो विवेकलाई ।

.. .. .. ..

सधैँझैँ उत्सव गरिरहेथ्यो शीतको थोपाले रक्सीको स्वादमा
रातभरि फूलसँग मातेर,
बिहानी घामको किरणले पनि
अनुष्ठान गरिरहेथ्यो नदीमाथि नाङ्गै नुहाएर ।

अलिबेरमा सकियो,
त्यो उत्ताउलोपन भुवाजस्तो सेतो बादलमा परिणत भएरै छाड्यो ।

मैले कसैसँग नसोधिकनै आफूलाई बौलाइदिएँ
त्यही घाम र त्यही बादलमुनि बसेर ।

मलाई विश्वास भइरहेथ्यो
एक दिन सबै बहुलाउने छन्
मलाई सद्दे देख्नका लागि ।

*माघ २०५५, भोजपुर*

# काठमान्डौ ओर्लेपछि

काठमान्डौ ओर्लेपछि
एकाएक छाती रित्तो लाग्छ ।
मायालुले छोडेर गएको मुटुजस्तै,
सपनाले छोडेर गएको आँखाजस्तै ।

आफैँ बाँच्न नभ्याउने काठमान्डौले
मायालुजस्तो सुन्दर गीत रच्न सकेन ।
बिपना भोग्न नपाउने काठमान्डौले
जीवनजस्तो राम्रो सपना देख्न सकेन ।

प्रेयसीका ओठजस्तै गीत रचूँ भनेर
आफ्ना आँखाजस्तै सपना देखूँ भनेर
छोडेको हुँ काठमान्डौ उहिले ।

काठमान्डौ छोएपछि जहिलै पनि
रित्तो भएको मनभित्रको कुनै रित्तो कोठामा लगिरहन्छ,
यी उज्यालो छोप्न बलेका बत्तीहरूले जलाइरहेछन् खोरम्पाहरूका बस्तीहरू ।
यी लङ्डा दौडाइहरूले कुल्चिरहेछन् तमाम अकाठमान्डौका
कोमल–निर्मल सपनाहरू,
यी खोक्रा उचाइहरूले प्रत्येक पल निहुर्‍याइरहेछन्
स्वाभिमानी शिरहरूलाई ।

जीवन देख्दै नदेखी
जीवनको भ्रममा रिक्तता बाँचिरहेझैँ
कहीँ नपुग्न तँछाडमछाड गरिरहेको काठमान्डौलाई छोएपछि
जीवन साँच्चै रिक्तताभन्दा ज्यादा रित्तो लाग्छ ।

जीवनको सुन्दरता तुलना नगर्दै मात्र जीवित रहन्छ कि कसो !

काठमान्डौ रहुन्जेल नछामे पनि रित्तो लागिरहन्छ छाती,
पानीले छोडेर गएको खहरेजस्तै
आँधीले छोडेर गएको खण्डहरजस्तै ।

छाम्छु, उफ् !
सनातनदेखिको रित्तो लाग्छ
मानौँ मेरो छातीमा कहिल्यै कुनै छाती नै थिएन ।

जीवनको गहनता त एक्लै बाँचिरहँदा मात्र गह्रौँ हुने रहेछ ।

हरेकपल्ट काठमान्डौ ओर्लेपछि यस्तै लाग्छ ।

*फागुन २०६०, काठमान्डौं*

# कमैया बस्तीमा

म छुटयाउन सकिरहेको थिइनँ
उनीहरूका भाग्य र
उनीहरूका छाप्रा अडयाइरहेका ती झिना झिक्राहरूमध्ये
कुन बढी विश्वासयोग्य थिए ।

उनीहरूले पछारेको घिनलाग्दो इतिहास
र उनीहरूलाई जिस्क्याइरहेको निर्लज्ज वर्तमानमध्ये
कुन ज्यादा नाङ्गो थियो,
कुन अधिक वीभत्स थियो
मैले बुझ्न सकिरहेको थिईनँ ।

तिनका अनुहारमा सन्तुष्टिजस्तै हँसाइ पोती
जब गुन्जिरहेथे स्वाभिमानमा उभिएका
ती उन्मुक्त आवाजहरू हाम्रो वरिपरि,
मलाई उदेक लागिरहेथ्यो ।

"पानी पऱ्यो भने के गर्छौ ? ", सोधिरहेथे साथीहरू
"खै के हुन्छ, भिज्छौं होला", हाँस्दै उत्तर दिइरहेथे उनीहरू
"भरे के खान्छौ ? ", उत्तर थिएन उनीहरूसँग, हाँस्नुबाहेक अर्को ।

मलाई रिस उठ्लाजस्तै भइरहेथ्यो
मेरो बोली हराएजस्तै गरिरहेथ्यो
जसरी तिनीहरू आफ्ना सपना हराइरहेथे ।

नभोगेको खुसीमा हाँस्दै गरेका ती अनुहारमा
चड्याङ्चड्याङ् हिर्काउँछ लागिरहेथ्यो मलाई
त्यो दु:खमा किन हाँसिरहेछन् तिनीहरू भनेर ।

इन्द्रेनी पनि लत्पतिएर टाँगिएजस्तो
पानी पनि सुइरो भएर बर्सिएजस्तो
घाम उदाएर पनि बस्तीको आकाशलाई समेत नछोई उम्किभागेजस्तो
उनीहरूको सपनामाथिको ठट्टा देखेर मलाई रोऊँरोऊँ भइरहेथ्यो ।

त्यो गन्तव्यविहीनतामा रुमल्लिइरहेका यात्राहरूको बस्तीबीच
बेसुरमा गाइरहेका चराहरूको स्वर
नियतिदेखि अनभिज्ञ नाचिरहेका पुतलीका उमङ्ग
र मिठासविहीन बहिरहेको लाटो हावा देखेर
मलाई बहुलाऊँबहुलाऊँ भइरहेथ्यो ।

त्यत्रो अपमान पराजित गरेपछि जन्मिएको
त्यो निस्सारता देखेर मलाई मरूँमरूँ लागिरहेथ्यो ।
उनीहरू रमाइरहेथे संसार विजय गरेझैँ ।

मलाई जीवनको रहस्यले पिरोलिरह्यो,
प्रश्न आयो मनमा,
के स्वतन्त्रता जीवनभन्दा मिठो हुन्छ ?
वा जीवन कठीन भएपछि बाँच्न सजिलो हुन्छ ?

*साउन २०६०, नेपालगञ्ज*

# नदी बोक्ने गाउँमा

अब
के लेखौँ र म ?

ती चराहरू पनि उडिसके
कुनै नयाँ बास खोज्न,
नदीका नदी पानीहरू मलाई हेर्दै बगिसके
कुनै अनिश्चित युग बोलाउन ।

लेक र बेँसीहरू
कुहिरो र पसिनाहरू
रङ्गीन नाचमा उत्सवहरूको
मग्न हुँदाहुँदै लोलाएर
नाच्दानाच्दै सेलाएर
कतै कुनै बिरानो भूमिमा
परदेसी उँघाइका अभ्यस्त भइसके ।

तिनले छाडेर गएका स्वरहरू पनि मधुरा भइसके
ती समय, बेला र अनुष्ठानहरू पनि टाढा कतै गइसके ।
च्याब्रुङ, बिनायो र ग्याम्टाका धुनहरू पनि
मलिन–मलिन भइसके ।

यहाँ बगिरहेछ उही नदी
भाग्दै गएका पानीको पछिपछि एकनासले ।

त्यसले हालेको सुस्केरा
गुन्जिरहेछ निरन्तर
प्रत्येक थोपा पानीलाई पछ्याउने
अर्को थोपा पानीको बगाइसँगै
थर्किएर वारिपारि, पारवाभरि ।

उक्किँदै गएका लिउनहरू
धमिलिँदै गएका कमेरा
साँगुरिँदै गएका गोरेटाहरू
भत्किँदै गएका चौताराहरू
बाँझिँदै गएका पारवाहरू
रसाउँदै गएका आँखाहरू
कथा भनिरहेछन् लगातार ।

छामिरहेछ भीरको एउटा बुढो ढुङ्गो त्यो कथालाई
कतै त्यसको अन्त्य छ वा छैन भनेर ।

*कात्तिक २०५८, भोजपुर*

# विपर्यास

जलिरहेछ मानिसको सौन्दर्य,
उसकै भ्रमित वर्चस्व र स्वार्थी अनुहारमा,
थपिइरहेछ मनहरूमा कोलाहल
भरिइरहेछ विचारहरूमा विद्रोह ।

उज्यालो उदाउन सकेन स्वतन्त्र नागरिकको बस्तीमा कहिल्यै
अस्ताउन दिएन कालो बारुदी धुवाँलाई बेथितीको मुस्लाले ।

सौन्दर्यको गीत लेख्ने एक जमात हातहरू
विसङ्गतिका फेहरिस्तहरूमा खियाइरहेछन् औंलाहरूलाई
भग्न कलमका टुक्राहरूबाट उच्छिटयाइरहेछन् शान्त विद्रोहहरू
जोडिरहेछन् भत्किएका मनहरूलाई मोर्चाहरूमा,
भाग्दै गरेका संवेदनलाई अक्षरहरूमा उनेर ।

हेरिरहेछन् भीडभन्दा बाहिर उभिएर निरन्तर
आफ्नो अस्तित्व फलाउनुपर्ने धर्तीमाथि मडारिइरहेका
टाउको बन्धक राखेका नर्तकहरू
र तेस्रो दर्जाका ठट्टाजस्ता तिनका बेढङ्गी नाङ्गा नाचहरू ।

लामबद्ध भएर घोत्लिरहेछन् एक्लैएक्लै
र चुपचाप देखाइरहेछन् आफ्ना संवेदनशील अङ्गहरू
बन्दुकहरूका आदेशमा हात उठाएर ।

सहिरहेछन् मुट छिचोलेर निस्किरहेका
हतियारभन्दा ज्यादा रोपिने अपमानका घातहरू ।
निशब्द उठाइरहेछन् आफ्नै लासहरू
र जलाइरहेछन् आफ्ना स्वाभिमानहरू ।

के सबै सिर्जना यस्तै हुन्छन् ?
के सबै सर्जकहरू
मजस्तै विचारमा विद्रोही र व्यवहारमा सम्झौतावादी हुन्छन् ?

*मङ्सिर २०६१, विराटनगर*

# भरिया

थाप्लाभरिको अभावको नाम्लाले
उचालेर पिठ्यूँभरिका भोका पेटहरूको बोझ
अन्धकारजस्तै अनुहार बोकेका दिनहरूसँग
हिँडिरहेछ उकालाओरालाका जीवनजस्तै अप्ठ्यारा बाटाहरू ।

शासकको मनजस्तै काला कठोर ढुङ्गाका चम्कामा
आफ्नै बैँसजस्तो निस्तो भात उमाल्छ
र मायालु कान्छीको म्वाईजस्तै नून थपेर निल्दछ, घुटुक्क ।

उसले कहिल्यै सोचेन
कि थाप्लाभरि सयौँको तृप्ति बोकेर
हिँडिरहेछ आफू भोको जीवन
सपनाहरूको पछिपछि
धाप मार्दै कर्मको निष्ठुर उपलब्धिलाई ।

आज किन हो, उसलाई तर
सिरान लगाएको ढुङ्गो पनि नियतिजस्तै कठोर लागिरहेछ ।
उसको संवेदनविहीन शरीरलाई छोई भाग्दै गरेको बतास पनि
युगौंको निद्राबाट ब्यूँझाइदिने तिव्रताको चिसो लागिरहेछ ।

आफूले कहिल्यै भोग्न नपाउने जीवनलाई
कल्पनामा निफन्दै निदाउन खोज्छ,
साँझजस्तै धमिलो र भाग्यजस्तै पातलो बर्कोले छोपेर आफूलाई ।
मानौं त्यो बर्कोले उसका सबै अभावहरूलाई छोपिदिनेछ ।

उसका तमाम खुसी र मुस्कान बोकेको भोलिलाई सम्झन्छ
आफैंसँग मुस्काउँछ र
कोल्टे फेरेर एउटा लामो सुस्केरालाई आँगालो हाल्दै
केवल रात कटाउनका लागि सुतिने सुताइ सुत्छ ।

भोलि बाँच्ने आशामा ऊ यसरी नै प्रत्येक आज मरिरहेछ ।

पुस्तौं बितिसक्दा पनि, तर
आएन भोलि कहिल्यै ।

*जेठ २०५९, भोजपुर*

# बिदा हुन्नँ

मोह भयो यी मनहरू र यो माटाको
यी घर, यी भित्ताहरू र बाटाको ।

समयको एउटा अंशलाई जीवनको छेउछेउबाटै बाँच्दाबाँच्दै
आँखाहरूमा केही सपनाहरू पनि बसिसकेछन्
मनमा केही मनहरू पनि पसिसकेछन् ।

जीवन भन्ने बेग्लै त्यस्तो के नै रहेछ र !

मनले जे छोयो, त्यही हो छोएको
मनले जे भोग्यो, त्यही हो भोगेको
जेमा बाँच्यो मन त्यही हो बाँचेको ।

फेरि कहिले होला यस्तो समय ?
फेरि कहाँ देखिएलान् यी मुहारहरू ?
फेरि कहाँ भेटिएलान् यी मनहरू ?
यस्तो सामीप्यको मालाभित्र
फेरि कहाँ फुल्लान् यी स्नेहका फूलहरू ?

उफ्  !
यी मायाहरू फेरि कुन तलाउ तर्लान् ?
यी सौहार्द्रका शीतल नदीहरू कहाँकहाँ बग्लान् ?
विश्वासका यी पहाडहरू कहाँकहाँ अड्लान् !

आत्मीयताका यस्ता न्याना आश्रयहरूले कहाँसम्म देलान्  ओत  ?
र यसरी सुटुक्क लुकाउन सकियोस् दुखेको मन
नभाँच्चिने गरी,
जसरी लुकाउँछ चराले गुँडमा फुल ।

म त जान्नँ कहीँ यहाँबाट,
छोडेर यी मनभन्दा धेरै मायाहरू ।
तर्दिनँ यी कुलेसाहरू पनि !
आफू सिङ्गै अटाउने
यी हृदयहरूलाई चटक्कै छोडेर जान सक्दिनँ पनि म ।

साँच्चै माया छ मेरो भने निस्कन्नँ म बाहिर,
बसिरहन्छु सँधै यिनै मनहरूमा टाँसिएर ।
हुन्नँ बिदा म यहाँबाट कहिल्यै ।

यो शरीरलाई त मैले तर,
जसरी भए पनि पठाउनै छ ।

*मङ्सिर २०५५, विराटनगर*

# आगाले भिजेको आकाश

म्वाइँका छापभन्दा धेरै गाढा
स्नेहको आभासका कोमलतम् स्पर्शहरू
मबाट अलग्गिएर गएका पनि हुन्
दुर्वोध कुनै पृष्ठभूमिभरि ।

छरिएका ती मायाहरूलाई
नदेखेझैँ, देखेर पनि
नभेटेझैँ, भेटेर पनि
उद्वेगहरूलाई आँखामा आएका
पुछ्न खोजेको पनि हुँ
पुछेको पनि हुँ ।

साँझको एउटा रुमानी र बैरागलाग्दो आकाशमुनि
मैले हेर्दाहेर्दै बाटाहरू आफ्नै सुरमा कतै गइरहे,
मैले भोग्दाभोग्दै क्षणहरू विक्षिप्त र निराश पनि भइरहे ।

त्यस क्षणमा
केही सुस्केराहरू अन्यौलमा परिरहे ।

यो बैँसमा
बैँस आउनु नै अपराधजस्तो
आँखाको अगाडि कुनै दृश्य देखिनु नै
आँखाको अभिशापजस्तो
जीवनभरि जीवन बाँच्नु नै कुनै श्रापजस्तो ।

तर पनि मायाका ती तमाम आकाशहरू
मायाले भरिएकै थिए ।
बैँसका ती अकूत क्षणहरू
बैँसले मातिएकै थिए ।

मैले एउटा क्षण
फेरि पनि
आफ्नो लागि चाहिरहेको थिएँ ।
मैले एउटा समयलाई फेरि पनि आफूजस्तै बाँचिरहेको थिएँ ।

त्यस क्षण र
त्यस वरिपरिका केही क्षणहरूमा
भित्ताहरू भएर पनि थिएनन् मेरा लागि
जमिनहरू भएर पनि थिएनन् मेरा निम्ति
समयहरू भएर पनि थिएनन् मेरा खातिर

आगो बग्दै थियो
पसिनाहरू बाफिँदै थिए
आ–आफ्ना कामका लागि ।

मेरा निम्ति थिएन केही पनि ।

तमाम मायाहरू भिजिरहेथे आकाश बोकेर पछ्यौरीका सप्कामा ।

बाटाहरू हिँडिरहेथे,
घरहरू हेरिरहेथे ।

सबै
आ–आफ्ना दायित्व निभाइरहेथे ।
आ–आफ्नो अस्तित्व खोजिरहेथे ।

*बैसाख २०५४, विराटनगर*

# जिन्दगी

जिन्दगी खाली कागज भएको भए,
ध्यान लगाएर अघाउँजी लेख्न हुन्थ्यो ।
जिन्दगी लेखिएको पन्ना भएको भए
मन लगाएर धित मरुन्जेल पढ्न हुन्थ्यो ।

यो जिन्दगी,
लत्पतिएका अक्षरले भरिएको
एउटा चिरकटो भयो,
न त यसमा लेख्नै सक्छु
न त यसलाई पढ्नै सक्छु ।

*भदौ २०५३, विराटनगर*

# रहर

रहरहरू खेलिरहन्छन् निरन्तर ।

म हेरिरहेछु,
नियतिदेखि अनभिज्ञ रहरहरू
स–साना केटाकेटीझैँ खेलिरहन्छन् मनभित्र ।

खेल्दाखेल्दै
फुटाउँछन् मनमा भएका खेलौनाहरू ती
कोतर्छन् मनका भित्ताहरू ती
कोट्याउँछन् मनका पत्रहरू र धुजाधुजा पारेर फ्याँक्छन् ती ।

थाह पाउँदैनन् रहरहरूले,
मान्छे
बाँचिरहेछ नाजुक जिन्दगीको अभावग्रस्त बँचाइ,
भत्कन हुँदैन भनेरै मात्र नभत्किएका
आशाका खण्डहरमाथि उभिएर भन्ने ।

रहरहरू निर्वोध छन्, निर्भय छन् ।

चकचक गर्छन् मनको भीरमा
बेस्सरी हल्लाउँछन् मनको हाँगामा चढेर
मनको भाँच्चिएको टुक्राको घोडा चढ्छन्
उफ्रन्छन् मनै थर्काउने गरी कहिले
कहिले फुटाउँछन् मनको बिर्को र
छताछुल्ल पोखिदिन्छन् भावनाहरू ।

रमाइलो लाग्छ,
रहरहरूले छरेका मनका टुक्रा बटुलेर जोडिरहन,
मेरी सानी छोरीले भत्काएका उसका खेलौनाहरू जोडेजस्तो ।

मनपर्छ केटाकेटीजस्ता रहरहरू
र मलाई जीवनवोध गराउँदै
घरिघरि रुस्क्याइरहने तिनका खेलहरू ।

झुकेर सलाम गर्छु म रहरहरूलाई ।
रहरहरू नआउनु हो खेल्न भने
मन पनि म जत्तिकै खालीखाली हुने थियो ।

जीवन मेरा आँखाबाट
मलाई थाहै नदिई कहिले भागिसकेको हुने थियो ।

*मङ्सिर २०६१, विराटनगर*

# जिजीविषा

नदीजस्तै बगिरहने अम्मल बोकेर
जीवन आफैँबाट सँधै भागिरह्यो ।

छुन खोज्दाखोज्दै रहरहरू आँखा तरेर गए
संवेदनशीलजस्तै लाग्ने शीतल हल्का समयहरूले पनि
साना ठूला भनेर छुट्याएनन्,
थप्पड हानेर खेदिरहे जुनसुकै सपनालाई ।

रातहरू मनभित्रबाट चिसो भएर निस्किरहे,
सामर्थ्य घरिघरि निस्किएर भाग्न खोजिरह्यो सुस्केरासँगै ।
जिन्दगीले बाँचुन्जेल खोजिरह्यो आफूलाई अड्याउने आड ।

नियतिले जीवनको छेवैबाट हाँसो चोरेर दौडियो ।
मनको उज्यालो डुब्दै गरेको हेरेर
आँखाहरू साँझजस्तै निरीह उभिइरहे ।
उम्किएको खुसी समातेर फर्काउने असफल प्रयासमा मनले युग बितायो ।

चिने नचिनेका समयहरू ठोक्किइरहे आकाङ्क्षासँग
र टुक्र्याएर लत्याई भागे ।
दृश्य–अदृश्य रङ्गहरूले लत्पत्याइरहे साँझ, बिहान र दिनहरूलाई
र अलमल्याइरहे बाटो ।

खुट्टाले ज्यादाजसो नटेक्नू भनेको ठाउँमै टेकिरहे,
हातहरू हावामा हल्लिएरै छिप्पिए ।

भ्रम र विश्वास छुट्याउन नसक्दाको अज्ञानताजस्तै आनन्ददायी हुँदोरहेछ
आकाङ्क्षाको लास मात्र बोकेर हिँड्नुको अम्मल पनि ।

ईश्वर ज्यूँदो छ वा छैन सरोकार रहेन ।

जेसुकै भए पनि
मेरानिम्ति आजसम्म
जीवन नै सर्वाधिक प्रिय भएर रहेको छ ।

*फागुन २०५५, भोजपुर*

# ठाडो उभिएको आकाश

धर्तीले ठाउँ छोडेर उडिरहेको बेला छ,
आँधीमा टेकी हिँड्नुपरेको बेला छ,
आगो बर्सिएर अनवरत, पानी ओढ्नुपरेको बेला छ ।

अन्धवेगले बहेको बतासमा झुन्डिएर
ज्यान जोगाउनुपरेको बेला छ
आँगालामा मृत्युलाई बोकेर जीवन खोज्नुपरेको बेला छ ।

मनहरूबाट कतै उडिभागे कलमहरू,
सङ्गीनहरूको पोखरीमा औंलो चोपेर लेख्नुपरेको बेला छ ।
सद्दे आफूलाई भ्रममा छु कि भनेर
भत्किएर बाटाछेउ उँघिरहेका खण्डहरसँग
जँचाइमाग्नुपरेको बेला छ ।

आकाश अब त्यो आकाश रहेन,
जुन बेला मनभरि विश्वास बोकेर उड्दथे चराहरू,
एकअर्कालाई देखेर रमाउँथे ताराहरू ।
भरभरात उज्यालो बोकेर बिहानीलाई सुम्पी जान्थ्यो जून
र यौवनजस्तै सुन्दर रहर लिएर ओर्लन्थे धर्तीमा किरणहरू ।

अहिले त,
ठाडो उभिएको आकाशमा ठोक्किएर
क्षितिजदेखि उड्दै आएका मनहरू विक्षिप्त भई झरिरहेको बेला छ,
हाँस्दै दौडिएका रहरहरू टुक्रिई छरिइरहेको बेला छ,
खेल्दै उफ्रिएका स-साना नानीहरूका विश्वास च्यात्तिइरहेको बेला छ,
माथि हिमालदेखि बग्दै आएका नदीहरू टक्क रोकिएको बेला छ ।
घामजूनले कोल्टो परेर हिँड्नु परेको बेला छ ।

वास्तवमा,
मनहरू अनन्तसम्म उड्न पाउँदा मात्र मन हुँदा रहेछन्,
रहरहरू कतै नठोक्किई दौडिउन्जेल नै रहर रहँदा रहेछन्,
धर्ती तल भुइँमा सुते मात्र उर्वर हुँदोरहेछ,
हावाले हावाऐँ बहे मात्र प्राण जोगाउने रहेछ,
पानी ओढिइएर हैन, पिइएर मात्र जीवनदायी बन्न सक्दोरहेछ ।

वास्तवमा,
सबै आ-आफ्ना ठाउँमै सुहाउँदा रहेछन् ।

आकाश ठाडो उभिँदा
सम्मानजनक बाँच्न चाहनेहरूलाई साह्रै गाह्रो हुने रहेछ ।

*भदौ २०६२, वीरगञ्ज*

# आकाशबाट

तल जीवनहरूले रहरहरूसँग खेलिरहेको देखिँदैन आकाशबाट
न त पारवाहरूको सहनशीलता भत्किएर खसेका
पैह्राहरूका घाउका गहिराइ देखिन्छन् ।

बादल लागेको आकाशबाट
आँखासँगै टाँसिएको आकाश पनि देखिँदैन
तलतल नै दौडिन्छ, बतास पनि देखिँदैन ।
न त आँधी बोकेर थर्थराएका रुखहरूको मनको कम्पन देखिन्छ ।

आकाशबाट
कोमल हँदाहुँदा मरेपछि
बाँच्नको लागि कठोर भएका ढुङ्गाको मन छाम्न सकिँदैन,
पालैपालो ताप र तुसाराको चुटाइ खाएर पनि मुस्काइरहेका
फूलको कोमलता छुन भेटिँदैन,
बसौँसम्म निरन्तर थिचिएपछि जुर्मुराएको भूकम्पको शक्ति नाप्न सकिँदैन,
गन्तव्य नपुगी नरोकिने अठोटले दौडिएका
वेगहरूको सामर्थ्य आँक्न सकिँदैन,
चौतारी छेउ एकअर्काका मनमा निदाइरहेका प्रेमीहरूको
सपना देख्न सकिँदैन ।

बस्तीका बस्ती इतिहासहरू बगाउँदै दौडिरहेको नदी पनि
स्थिर देखिन्छ आकाशबाट ।
डाँडाहरूका सिर्जनशील कारवहरू प्रभावहीन देखिन्छन् ।
मैदानमा लहलहाइरहेका सृष्टिका कोपिला र फूलहरू सुवासविहीन लाग्छन् ।
कुनै आँटले कहिल्यै उक्लिन नसकेको हिमाल पनि होचो देखिन्छ ।
मान्छेले आस्थाका बुट्टा कुँदेर उकासेको धरहरा पनि पुड्को देखिन्छ ।

एक छिन त यस्तो पनि लाग्छ,
आकाशबाट हेर्दा
धर्तीका कुनाकुनाका संवेदन छाम्न सकिन्छ
हावा र विचारहरूको रङ्ग पनि देख्न सकिन्छ ।

र सयौँ क्षितिजपारिसम्म
सम्पूर्ण सृष्टि नै सनातनदेखिको शान्त देखिन्छ ।

सँधै आकाशबाट मात्र बोल्नेहरूलाई सोधौँ न, एकपटक
के संसारको वास्तविकता
साँच्चै आकाशबाट देखिएजस्तै नै छ त ?

*साउन २०६१, काठमाण्डौं*

# पुनरागमन

तिम्रो सम्झनाले
किन यसरी एकाएक
धपाउँछ सिरेटो मनबाट, र
आफूलाई बाँधिराखेको हिउँ पराजित भएर पग्लिभागेझैँ
मुस्काउँछन् अधरहरू ?

धर्ती, आकाश, समय र सम्बन्धहरूको निस्सारताबाट बिरक्तिएर
कुनै पलायनको बोरामा कसी आफूलाई
जीवनको कुनै भीरबाट फ्याँकेर फर्किआऊँझैँ भएको बेला
टाढा कतैको तिम्रो उपस्थितिको आभास मात्रले
किन जुर्मुराउँछ फेरि रहरजस्तो केही
र नज्यूँदो बाँचिरहेको समय एकाएक जीवनमय गुन्जिन्छ ?

जीवन यस रूपमा आफूभित्र समाहित भएको थाह थिएन,
फर्केर हेर्दा
विगतका कुनै कुनामा मायाको अनुभव पनि देख्दिनँ ।

छैनौ सामु तिमी यस बेला
कसलाई सोधौँ,
जीवनले मायाको सिर्जना गर्छ
वा मायाले जीवनको ?

*जेठ २०५८, भोजपुर*

# कार्यालय

कार्यालयभित्र
धर्तीको सर्वाधिक मूल्यवान् भएर पनि
शासकद्वारा
बाढीको बर्सात्झैँ सस्तो ठानिएको
जनताका पसिनाले बनेका दराजहरू छन् ।

दराजभित्र छन्,
नोकरको जागिर खाएर मालिक भएकाहरूका
बदनियत र असक्षमता गनाउने फाइलहरू ।

जहाँ हाम्रा कमजोरीका तुनाले बाँधिएको
एउटा वीभत्स इतिहास छ,
हाम्रा निर्लज्जताले लेखिइँदै गरेको
एउटा लाटो वर्तमान छ,
एउटा छरिपस्ट भविष्य छ ।

के तपाईँलाई थाह छ,
त्यो कार्यालयको नाम
सिँहदरवार हैन भने
के होला ?

*असोज २०६२, विराटनगर*

# यात्रामा निस्किँदै

पाइलाहरू
हिँडदै थिए, अडिँदै थिए ।

जीवनलाई बँचाइराख्न
जब म छाडेर गइरहेथेँ हरेक पाइलामुनिका माटालाई,
माटाहरूले मलाई समात्न खोजिरहेथे
ढिस्का र ढुङ्गाहरूले बाटो छेक्न खोजिरहेथे ।

त्यो रातलाई
वास्तवमा कति विषादमय समय बाँच्नुपरेको थियो
ती ताराहरूलाई,
त्यो जूनलाई,
कति अन्धकारमय परिस्थितिमा हाँस्नुपरेको थियो ।

मैले तर
हिँडिरहनु थियो ।

बुझपचाउनु परेको थियो
ती पातमा अडिएका रातका आँसुहरूलाई
ती फूलका चोट र निरीहतालाई
हाँगा भाँचिँदाका ती वृक्षहरूका पीडाहरूलाई ।

र लुकाउनु थियो
आफ्नै आँखाबाट फर्की मनमा जमेको पोखरीलाई पनि ।

मैले आफैँले कहिल्यै नबुझेको कुनै नियम पालन गर्नु थियो,
एक्लै, एकलासको बाटामा पाइला चालिरहनु थियो ।

पछि जे हुनु नहुनु छँदै थियो
बाँचुन्जेल मैले
लगातार नबाँचिरहनु थियो ।

*फागुन २०६०, विराटनगर*

# पिलो

ढोका थुनेर छेकिँदैन,
अलार्म राखेर जोगिँदैन,
आउनु छ भने,
कुनै बाटो र पूर्वाभास विनै आउँछ
र राज्य जमाउँछ शरीरको कुनै अप्ठ्यारो ठाउँमा पिलाले ।

मान्छेको पद र प्रतिष्ठालाई टेर्दैन
डराउँदैन कसैको गफ र धम्कीहरूबाट
हेर्दैन पिलाले शरीरको ढाँचा र बनावट
न त उमेर हेर्छ कहिल्यै ।

पिलो आएपछि देरूदैन मान्छेले
रुखमा अम्बा पाकेको
देरूदैन कतै गोलभेँडा, ऐँसेलु र लिच्ची,
जताततै पिलै देरूछ ।
न त कसैले आइसक्रिम वा आलुचा खाएकै देरूछ ।

आफूलाई एकरत्ती मन नपरेको पिलालाई बोकिहिँड्नुपरेको मान्छेले
चिन्दैन आफ्नै अनुहार,
ऐना हेर्दा घाँटीमाथि केवल एउटा ठूलो पिलो देख्छ ।
शरीरमा पिलो लिएर मिटिङ्मा बसेको मान्छेले
बुझ्दैन कुनै एजेन्डा,
पिलो उखेलेर फ्याँक्नु नै सबै एजेन्डाको निक्यौंल देख्छ ।

मान्छे बिर्सन्छ
उसका शरीरमा पिलोबाहेक अरू अङ्ग पनि छन्,
बिर्सन्छ, पिलो सँगसँगै ऊ पनि बाँचिरहेको छ ।

पिलो केन्द्रबिन्दु बन्छ
मान्छेका रिस र गालीको,
काम, विचार र सम्पूर्ण सोचको ।

चाहिँदैन टीभीको रिमोट कन्ट्रोलर
खेलाउँदैन मान्छे सेलफोनका बटनहरू
उसलाई पिलो सुम्सुम्याउनमै आनन्द आउँछ ।

पिलाले पिरोलेको क्षण
मान्छे जीवनकै सर्वाधिक ज्ञानी बन्छ, र
आफूलाई रुवाइरहेको शत्रुको
उत्तरोत्तर बृद्धिको कामना गर्दछ ।

आएपछि
पिलो साँच्चै राजा नै हुन्छ एक अवधिभर ।

तर पिलाको जरा मनसम्म पुगेको हुँदैन,
पिलाको टाउकाले मस्तिष्कलाई छोएको हुँदैन,
त्यसैले धेरै दिन टिक्दैन ।

बेलैमा खिलैसम्म उखेलेर फ्याँक्नैपर्छ पिलालाई ।

थोरै दिन भए पनि
रहुन्जेल त आखिर यसले
पिलैले दिने दुःख दिएर छाड्छ !

*भदौ २०६२ वीरगञ्ज*

# आदेश

आदेशहरू त सुनिइरहिन्छ तल बसेपछि ।

दाहिने नफर्क – देब्रे नसुत ।
खुकुरी साथमा राख – हतियार छेउमा नराख ।
साँझैमा सुत – मध्यरातसम्म काम गर ।
झ्यालढोका खुल्लै राख – ढोकामा साँचो लगाओ ।
एकभन्दा बढी नहिँड – एक्लै नहिँड ।
आँखा खोलेर नहेर – चौबिसै घण्टा पहरा देओ ।
भोकै नबस – केही पनि नखाओ ।
कपडा नलगाओ – नाङ्गै नहिँड ।

मैले बुझ्न सकेको छैन,
आदेश दिनेले किन सोच्न सक्दैन ।

*फागुन २०५५, भोजपुर*

# ढाका

ढाकाले आफ्ना आँखालाई
गरीबी ओच्छ्याएर ठडिएका अग्ला भवनका टल्किने झ्यालमा राखेर
तल फुटपाथतिर माग्दै हिँडेका हातहरूका स्वाभिमान र अधिकारतिर हेर्छ,
वा
च्यातिएका छानाबाट तारा र जूनजस्ता रहर हेर्ने
झुपरपट्टीका केटाकेटीका सपनामा ओच्छ्याएर
माथि आकाशतिर हेर्छ,
बुझ्न सकिनँ ।

थाह पाइनँ मैले,
ढाकाले आफ्नो उपस्थितिलाई
आन्दोलित मजदुरको जुलुसमा पिल्सिएर मर्माहत ढलेको
घाइते बृद्धको च्यातिएको कमेजभित्र पाउँछ
वा
भवनको अनुपमेय वास्तुकलाले छोपिएर
तर्क, विरोध र दर्शनको बाढीमा डुबेको
संसदभित्र देख्छ ।

टायर जलेको धुँवामा केके उडिरहेथ्यो ?
ट्राफिक जाममा रोकिएर समय कहाँकहाँ नपुगिरहेथ्यो ?
ठम्याउन सकिनँ मैले ।

परिचित–अपरिचित पाइलाहरूको अव्यवस्थित भीड बोक्नमा व्यस्त सडक
जतातते ओच्छिएर
अझै कुनकुन उपद्रोको स्वागतको लागि प्रतीक्षारत थियो ?
छेउमा आउने मान्छेका अनुहारहरूलाई थरिथरिका नोटजस्तै देख्ने पसलहरू
कसकसको आगमनमा रुष्ट थिए ?
आफ्नो फेदमा सुतेको सडकबालकलाई उज्यालो देखाएर
उभिइरहेको ल्याम्पपोस्ट
रातभरि के सोचिरहेको थियो ?
जान्न सकिनँ ।

साँझ सडकमा
मगन्ते भनिने भोका बालबालिका
जब फूलभन्दा कोमल हात पसारेर
आफ्ना बाल्यकालको मूल्यमा विश्वको भविष्य बेचिरहेथे,
कहाँ पुग्न त्यसरी अन्धवेगले दौडिरहेथे मोटरका कन्भोएहरू ?
कुन उत्सवको खुसीयालीमा नाचिरहेथ्यो मोटरमा टाँगिएको झन्डा ?
बुझ्न सकिनँ ।

सोध्नु थियो मैले कसैलाई,
त्यो डेढ करोडको भीड बीचबाट
सायद, कसैले भनिदिन पनि सक्थ्यो ।

तर सोधिनँ ।

उभिएर निरन्तर हेरिरहँदा पनि चाल पाउन सकिनँ मैले
ढाका कुन बाटो कता जाँदै थियो ?

केवल अनुमानमा चित्त बुझाएँ ।

ऊ पनि आफ्नै अनुहार नचिनेर टोलाइरहेथ्यो
कुनै दलदलमा टेकेर चारैतिर हिँड्न खोजिरहेथ्यो
विरोधाभासमा उभिएर
कतै जाऊँ कि नजाऊँ गरिरहेथ्यो ।

उसको नियति पनि
ठ्याक्कै काठमान्डौ कै जस्तो थियो ।

*साउन २०६३, विराटनगर*

# लोडसेडिङ्

समय
अँध्यारो बोकेर
धर्तीभरि पोखिएको छ ।

जून गौरवान्वित छ
एक्काइसौँ शताब्दीको पृथ्वी टेकेर उभिएको एक सहरको रात
केवल आफ्नो उज्यालो ओढी बाँचेको देखेर ।
जिस्काउँदो छ, बादलमा लुकेर घरिघरि
तल छामछाम छुमछुम गर्दै हिँडिरहेका आकृतिहरूलाई ।

आकाश आफ्नो पछ्यौरीभरि तारा टल्काएर खिज्याउँदो छ
मास्तिर हेर्ने जो कोहीलाई ।

यस युगको धर्तीप्रतिको यो उपेक्षा देखेर रिसाउनुपर्थ्यो मैले सायद ।
तर म आनन्द लिइरहेछु, यो लोडसेडिङको ।

यो अँध्यारो
मेरो देशको
भूत, वर्तमान र भविष्यभन्दा
ज्यादा स्पस्ट लागिरहेछ ।

*जेठ २०६४, विराटनगर*

## ह्याङ्ओभर

युगौँदेखि बेथितिको कुहिरोभित्र अल्मलिएको विवेकले
बुझ्न सकेन
समयका गीत र आगतले बोलाएका आवाजहरू ।
दौडिन खोजेका गति ठोक्किएर दुर्घटना भोग्न अभ्यस्त मानसिकताले
आँट्न सकेन लक्ष्यसम्मको हिँडाइ ।

केटाकेटीका भविष्य जलिरहेको समाचार सुन्ने कानले
सुन्न जानेनन् तोतेबोलीका सङ्गीतहरू ।
युवतीहरूका चुरासँगै फुटिरहेका सपना र
सिन्दुरसँगै मेटिइरहेका रहरहरू देख्न पारङ्गत आँखाहरूले
देख्न जानेनन् यौवनका मनमोहक रङ्गहरू ।
बुझ्न जानेनन्
सृष्टिको कठोरतालाई पराजित गरी उम्रिँदै गरेका जीवनहरूलाई ।

यस्तो लाग्छ
घरघर माग्दै बटुलूँ सारा रेडियो र टेलिभिजनहरू, र
पत्रिकाको रासमाथि थुपारेर जलाइदिऊँ
थोत्रे समयको कन्टेनरसँगै ।

थाह पाएदेखि सधैँ बिना गन्तव्य बराल्लिँदै हिँडेका पैतालाबाट
खुर्किऊँ पुराना बाटाका सबै डोबहरू ।
मेटाऊँ स्मृतिबाट अनुभवका सबै चित्रहरू ।

एउटा भाँडो यस्तो होस्
जसमा चुर्लुम्म चोबेर समयलाई
एउटा नयाँ युग निकालूँ ।

सदियौँदेखिको विसङ्गतिमा हुर्किएको टाउकाले
बोक्न सकेन नयाँ विचारहरू ।

*बैसाख २०६४, विराटनगर*

# तिमी जसरी छ्यौ

म
कुनै नज्यूँदो जीवनको किनारमा उभिई
बहन छोडेको हावाजस्तो नभएको कुनै आकृतिलाई
अँगालो हालेर
बाँचेको भनी निस्तो मातमा रमाइरहेको हुने थिएँ ।

आजसम्म अरूले अर्थ लगाइदिएकैलाई
शीतलता भनिरहेको हुने थिएँ,
गुलाब वा त्यस्तै कुनै हृदयविहीन फूलको सुगन्धबाटै
लट्ठिइरहेको हुने थिएँ,
यदि तिम्रा अनुरागका कोमल आभासहरूले
मेरो हृदयका परागहरूमा
स्नेहिल सुगन्ध छर्दैनन् थिए भने ।

मेरा गीतका मुर्च्छना,
मेरा कविताका विम्बहरू,
मेरो जीवनकथा,
पात झरेका रुख-रुख चहारिहिँड्ने
खडेरीको हावाजस्तै सौन्दर्यविहीन
बिना गन्तव्य
पट्यारलाग्दो लठेब्रो दौडाइ कुदिरहेका हुने थिए ।

घामका किरण
प्रत्येक बिहान जीवन बोकेर
मेरा उमङ्गलाई उकास्न आउने थिएनन् ।
मलाई गीत सुनाई उडिहिँड्ने चराहरूले
आफ्ना स्वरमा मनदेखिको प्रेम भरेर
गाउन जान्ने थिएनन् ।

तिम्रा कोमलतम् शब्दले समेत भाँचिन खोज्ने
प्रेमजत्तिकै कोमल मेरो मन चिमोटेर
नभत्काइदिँदी हौ बँचाइको लय कहिलेकाहीँ त,
प्रेमको आधा रहस्य बुझ्दै नबुझी
जीवन सङ्गीतमय भएको थाहै नपाई
जीवन भनी
रित्तो समय उक्लिएर उम्कने थिए
मेरा भोगाइहरू ।

आफ्ना आकाङ्क्षाका अनगिन्ती रङ्गीन छटाहरूले
जसरी सजाएकी छ्यौ
जीवनका मेरा दृश्यहरू,
त्यसो नहुनु हो भने,
सृष्टिका सौन्दर्यको भ्रमित व्याख्या गरेरै
ओइलाई झरिसक्ने थिए मेरा इच्छाहरू ।

मेरो जीवनका जुन धुनहरूमा
जसरी छ्यौ तिमी
त्यसो नहुनु हो भने,
सामर्थ्यले सम्पूर्ण भरिएर
हजार जीवन बाँच्ने रहर बोकी
उभिएको छ जो
तिम्रा सामु
त्यो म हुने थिएन ।

फागुन २०६३, विराटनगर

# एक पुष्पवीजको आह्वान

स्वार्थ ओढेर नाच्ने यस दुनियाँमा
मलाई कोपिला बन्न नदेऊ
बन्न नदेऊ मलाई फूल ।

मलाई जर्जर पारेर फ्याँकिदेऊ
ढुङ्ग्यानहरूमा मिल्क्याइदेऊ
मरुभूमिमा छोडिदेऊ ।

पानीको अनुहारसम्म पनि नदेखियोस् सपनामा समेत
हावाले मतिर फर्केरै नहेरोस्
बरु, सक्छ भने पोलोस् घामले रातभरि पनि
र डढाओस् मेरा सम्पूर्ण संवेदनशीलता
भत्काओस् मबाट सुकोमल निर्मितिका सबै अवयवहरू ।

उम्रनेछु म त्यहीँ
काँढैकाँढा बोकेर
एउटा क्याक्टस भएर ।

*भदौ २०४४, विराटनगर*

# यो सहर कसको हो ?

बसाइँ सरेर आएका
सुन्दर कञ्चन गाउँहरू थुप्रिएर
प्रलयकारी बाढीजस्तो सहर बनिएको हेरिरहेको थिएँ ।
धुले सडकमा खेल्दाखेल्दैको आफूलाई
हुर्किंदै गएका भवन र च्यातिँदै बढेका बाटाहरूबीच
टेक्नै डर लाग्ने समयमा उभिएर खोजिरहेको थिएँ ।

थाह पाएदेखि
लगातार हिँडिरहेको आफ्नै सडकको पेटीमा
हराइरहेको मलाई
जीवनको मध्यान्हमा आएर
आकृतिविहीन कसैले थर्थर काँप्दै च्याप्प समायो र सोध्यो
यो सहर कसको हो ?

पर पँधेरादेखि उठिआएका इन्द्रेनीहरू
मध्यरातको कृत्रिम उज्यालामा हराइरहेका हेरिरहेको छु ।
क्षितिजतिरबाट प्रेमको गीत गाउँदै उडेका चराहरू
भ्रमको धुनमा नाचिरहेका हेरिरहेको छु ।

हेरिरहेको छु,
शीतलताले मलाई छुँदै पसेको हावा
मध्य सहरमा डढेलो लगाएर मलाई घचेट्दै फर्कियो ।
जीवन बाँड्दै हिँडेको पानी
सहर पसेर जीवनको बँगैचा मडारेर निस्कियो
बाहिर भेटिँदा साँच्चै मान्छेजस्तै लाग्ने मान्छेले पनि
सहरमा एउटा अमान्छे बेच्यो र आफू त्यसैमा विलीन भयो ।

एक क्षण यस्तो लाग्छ,
निरन्तर गुन्जिरहेको गालीहरूको आँधीमा सामेल होऊँ
दायित्वबोधलाई फुकालेर नाङ्गिऊँ र
यही सहरको पानीले बनेको रगतको जोश
यसकै हावाले थेगिएको श्वासको आवेग
यसैले सिकाएको बोलीको कम्पन
झिकेर कराऊँ –

– यो सहर भीडको अधबेस्रो नारामा नाच्नेहरूको हो,
– मान्छे छोप्ने लेपनमा सुन्दरता देख्नेहरूको हो,

– संवेदनहीनतालाई आदर्श बनाएर उँघिरहनेहरूको हो,
– सपनामा बाँचेर विपनाभरि मरिरहनेहरूको हो,
– हिँड्दाहिँड्दै आफैँलाई हराउनेहरूको हो,
– बौलाहाहरूको हो ।

यो सहर
– जीवनको सङ्गीत बोकी गुराँसको हाँगाबाट उडेको डाँफेलाई
मन्दिरको गजुरमा चढाएर काग बनाउनेहरूको हो ।
– ईश्वरलाई बृद्धाश्रममा छोडेर घर फर्की
टेलिभिजनमा खोज्नेहरूको हो ।
– मान्छेको बच्चो फोहरको कन्टेनरमा फ्याली
कुकुरलाई दूध चुसाउनेहरूको हो ।

यसको कुरूपताको वेदनाले निचोरिएको मन बोकी
जीवनको आधी नाङ्लो समयलाई केलाएर हेर्दा, तर
म,
आफूलाई र यस सहरलाई एकै दृष्टिपटलमा देखिरहेको छु ।

यो सहर मेरा उद्वेगहरूलाई
आफ्ना बितृष्णासँगै पिएर हाँसेको छ,
मेरा अपूर्ण रहरहरूलाई खेलाएर हुर्किएको छ,
मेरो प्रेमकथाका सुन्दर सपनाहरू ओढेर निदाएको छ,
मेरो विद्रोहको जुलुस बोकेर ब्यूँझिएको छ ।

यस सहरका धूला र धूँवालाई मैले घरसम्म ल्याएर
अनुहार र लुगासँगै धोएको छु,
यसका कर्कश स्वरहरूलाई टिपेर ल्याई
केलाएर आफ्ना गीतमा कुँदेको छु
यसका विक्षिप्त दृश्यहरू बटुलेर आफ्ना कवितालाई सिँगारेको छु,
यसकै सुस्केरा उनेर आफ्नो जीवनको धुन बुनेको छु ।

यसका तमाम गुणदोषको जिम्मा लिँदै,
म भन्छु,
यो सहर मेरो हो ।

*फागुन २०६४, विराटनगर*

(जर्मन कवि हान्च उलृख त्राईखेलको कविता यो सहर कसको हो ? को प्रतिक्रियारूप लेखिएको कविता)

# सपना नदेखूँ

यस्तो मातूँ कि
आफूलाई समेत बिर्सूँ
यो रात कुनै सपना नदेखूँ ।

हर रात
आफूभन्दा ज्यादा
मलाई भत्काएर जाने
विपनाजस्तै लथालिङ्ग सपना नदेखूँ ।

कहिल्यै कसैले देख्न नचाहेका
खबरकागजका अनगिन्ती वीभत्सताहरू,
टेलिभिजन र रेडियोबाट विस्फोट भई निस्किने हिँस्रक स्वरहरू,
कानै उखेलेर लाने आवाजहरू,
विस्मयको सीमा पार गराएर
आँखालाई उघारै पारी छोड्ने दृश्यहरू,
मुटु चुँडाएर भाग्ने संवेदनहीनताहरू,
आफ्ना उच्छृङ्खल भीडका नाङ्गा जुलुस लिएर
कोलाहल गर्न नआऊन् सपनामा ।

महल बनाउँदा बनाउँदै खण्डहर भएको,
शीतलताको नदी बग्दाबग्दै आगो भएको,
आकाङ्क्षाका रङ्गीन दृश्य
नभएको झिलिमिलीमा मिसिएर खरानी भएको,
प्रतिफल लिएर आउने सपनाहरू नआऊन् मलाई जिस्क्याउन ।

सम्पूर्ण समय नै धमिल्याउने
बेइमानीको निबन्धभन्दा ज्यादा बेइमान
वर्तमानको यथार्थजस्तै भयानक
सातवटा जीवन एकै ठाउँ अल्झिएझैं जटिल
विछोडका रातभन्दा लामा
सपनाहरूबग्दै जाऊन् र कतै ब्ल्याकहोलतिर पसून् ।

यो रात
प्रेमको मद्होस किरण ओढेर आओस्
अनुरागका आशक्ति बोकेर आओस्
आओस् मायाको मात लिएर ।

मायामा यसरी मात्तिऊँ कि
कुनै सपना नदेखूँ ।

*जेठ २०६४, वीरगञ्ज*

# कविता फुरिरहेको छैन – १

एउटा कविता लेखूँ भनेर बसेको हुँ
सृष्टिका केही सौन्दर्य बटुलूँ भनेर बसेको हुँ ।
जीवन सिद्धिएर बाँकी रहेको
सौन्दर्यविहीन यो बोधो बँचाइमा
बाँच्नुको अर्थ कुदूँ भनेर बसेको हुँ ।

हर पल मृत्युले नाच्ने यो धुमिल उज्यालामा
यो हुन नपर्ने जेसुकै हुन सक्ने अनिश्चिततामा
कुन वीभत्सबाट झिक्नु सुन्दरता र लेख्नु कविता !

जताततै प्रलय छरिएको यस घडीमा
अरण्यरोदनभन्दा
सहरको विक्षिप्त मुस्कान ज्यादा हृदयविदारक छ ।

मान्छेको आधिपत्य भएको यस धर्तीमा
मान्छे हुनु कति विषम, कष्टकर र पीडादायक ?
बाँच्न खोज्नु कति बोझमय, असुरक्षित र विदीर्ण ?

कति दुष्कर
कति कठिन
कति वीभत्स यो समय ।

तर
चाहे भोक खाएर रोग बाँचोस्
चाहे घाम ओढेर ताप बाँचोस्
चाहे हिउँ सुतेर जाडो बाँचोस्
चाहे अभाव पिएर मृत्यु बाँचोस्
एकपल्ट मान्छे भइसकेकाले
मान्छे
बाँचुन्जेल मान्छे हुन विवश छ
र अभिशप्त छ
कहिल्यै मान्छे हुन नपाउन ।

संवेदन ओडार पसेको यस बेला
यस्ता आपसमा झगडा गर्ने सत्यहरू बटुलेर
केके नबनाउनु ?

समयले सर्वाङ्ग नग्नता ओढी निदाएको यस घडी
कालो अक्षर पनि रातो देखिन्छ
निलो अक्षर पनि रातो देखिन्छ
रगतले भिजेको यस धर्तीमा
पसिनाको अक्षर पनि रातो देखिन्छ ।

स्वयम्भूका आँखाहरूले
टुलुटुलु हेरेर मात्र के गर्नु ?
परेवाहरू उड्न सक्दैनन्,
बारुदका राता बोऱ्हरूले थिचिएर ।

ॐ नम शिवाय:, खै शिव ?
सर्वे भवन्तु सुखिन:, खै सुख ?
माप्र गाम: पथो वयम्, खै बाटाहरू ?
बिस्–मिल्लाह इर रहमान इर रहीम ! , खै के सुरु गर्नु ?
ॐ मणिपद्मे हुँ, शान्ति शान्ति शान्ति
यो प्रलय पोखिएको बेलामा
शान्तिको एउटा शब्दले के गर्नु ?

यो असुरक्षित जीवन र मृत्युको मध्यान्हमा
मान्छे खोज्दै छ आफूभित्रबाट निस्किभागेको मान्छेलाई
मृत्युको असुरक्षित हाटमुनि ओच्छिएर ।

आत्मा निस्किभागेर बाँकिरहेका
खोक्रा मान्छेहरूको यो भीडमा
जे सुकै मृत्यु बनेर उभिएको छ ।

यस्तोमा सुरक्षाविहीनता नै सुरक्षा हुन सक्छ,
जहाँ
एउटा सुरक्षित मृत्यु मर्न सकिन्छ ।

यस्तो बेलामा
लेखिइहाले पनि
मृत्युको कविता लेखिन सक्छ ।

फुरिहाले पनि
निरीह जनता र असक्षम शासनका षडयन्त्रहरूको कविता फुर्न सक्छ,
भोक र रोगहरूको कविता फुर्न सक्छ,
नाङ्गा आङ र रुन्चे हाँसोहरूको कविता फुर्न सक्छ,
र फेरि एक छाल मृत्युहरूको कविता फुर्न सक्छ ।

मलाई जीवनजस्तै बाँच्न पाउने जीवनहरूको कविता लेख्ने मन छ ।

समय मृत्युमा चढेर दौडिरहेको यस क्षण
कुनै कविता फुरिरहेको छैन ।

*फागुन २०५५, भोजपुर*

# कविता फुरिरहेको छैन – २

यस बेला कविता फुरिरहेको छैन,
तर मलाई कवितै लेख्न मन लाग्यो ।

यहाँ संसार बोकेर निदाइरहेका किताब र पत्रिकाहरू छन्,
मलाई रुँघेर उभिइरहेका भित्ता र झ्यालहरू छन्
मनजस्तै पग्लिनै लागेका चिठ्ठी र
कसैलाई सम्झिएर टोलाइरहेझैँ लाग्ने तसवीरहरू छन् ।

यसबेला यहाँ, यहाँ नभएका चिजबाहेक सबैथोक छन् ।
तर तिनलाई बिथोल्न मन लागेन ।

मलाई मैनबत्ती वा रेडियो लेख्न मन लागेन
टेबुल, कलम र कागज लेख्न मन लागेन,
कविता लेख्न मन लाग्यो ।

धर्तीको यस केस्रामा
पढ्ने फुर्सद छैन, गिट्टी फुटाउन छोडेर;
सोच्ने जाँगर छैन, भोकलाई ओच्छ्याएर;
सुमधुर बोल्ने धैर्य छैन, नारा र जुलुस थन्क्याएर;
केही लगाउने खाँचो छैन, राजनीति फुकालेर;
बाँच्ने फुर्सद छैन, जीवन घिसार्न बिसाएर ।

यस अन्यौलमा,
गिट्टी फुटाउँदाफुटाउँदै आफैं फुटेका जीवनहरूको कथा लेखिएला,
आजीवन नाङ्गै बितेका समयहरूको निबन्ध लेखिएला
दिनभर जीवन खोजी नभेटेर
राततिर फर्किंदै गरेका लखतरान साँझहरूका उपन्यास लेखिएला,
सौन्दर्यले सिँगारिएको कविता जन्मने छाँट छैन ।

समयले वीभत्सरसको नाटकमा नुहाइरहेको बेला
कसरी जन्मियोस्, सुकोमल युगको कविता !

अविवेकको हन्डी टाउकामा ओढेर
छेक्न सकिँदैन अनियन्त्रित बगेको अव्यवस्थाको बौलाहा बाढीलाई,
निर्लज्जता र मुर्ख्याँइँ चपाएजस्तो सजिलो छैन
भत्किएको समयका टुक्राहरू चपाउनलाई ।

यस्तोमा फेरि एक विदीर्ण कालखण्डको प्रलाप लेखिएला बरु,
उल्लासको मिठासले भिजेको कविता केही गरी फुरिरहेको छैन ।
मलाई,
जीवनमय उमङ्गहरूको धुनमा नाचिरहेको युगको कविता लेख्ने मन छ ।

सृष्टिका सौन्दर्यहरू एकएक गरी पलायन भइरहेको यस धर्तीमा
यस बेला कुनै कविता फुरिरहेको छैन ।

*फागुन २०५५, भोजपुर*

# व्यस्तता

यति व्यस्त पनि नहोऊँ,
कि आफूलाई हेरी मुस्काइरहेको
आफ्नै आँगनको फूलको सुवास चिन्न नसकूँ ।

सृष्टिका सम्पूर्ण खुसी
आफू मात्र खसालेर रमाइरहेका केटाकेटीका
खेल हेर्न नभ्याऊँ ।

प्रेम बोकी हिँड्ने बतासका स्पर्श,
जीवनको स्वरमा गुन्जिएका चराहरूका चहचहावट,
ओरालै लाग्दा पनि नाचिरहेका झर्नाहरूका उमङ्ग,
अँध्यारालाई छक्याउँदै रमाइरहेका जूनकीरीका चमक,
केही बुझ्ने फुर्सद नहोस् ।

कहिलेसम्म हतारोको ठेलाइमै बगिरहूँ ?
चटारोको भुमरीमै घुमिरहूँ ?
जीवन भक्किएर उचाल्लिएको उचाइतिर लखेट्टिरहूँ ?

जीवनको पल्लो छेउ पुगुन्जेल
आफ्नै अनुहार हेर्ने समय निकाल्न नसकूँ
र एक चोइटो समय हात लागुन्जेलमा
ऐनामा आफूलाई हेर्दा देखिने मायालुको मुहारबाट
ओज, माधुर्य र यौवन भागिसकेको होस् !

टाउकाभरि रित्तताको भारी बोकेर
यो युगौं बुढो समयको खेदाइमा
कहिलेसम्म भागिरहूँ म ?

जीवन खोज्ने आफ्नो यात्रामा
हिँड्दै गर्नुस् तपाईंहरू ।

म
एक छिन यहीं बसी
एक निमेष
जीवन बाँचेर आउने छु ।

*साउन २०६४, विराटनगर*

# बर्सात्मा बुद्धको मूर्ति सामु

बिर्सिएर सबै ब्याकलग र फाइलहरू
छुट्टी मनाउँदै
सडकका बीचैबीच
हिँडेका हूल र जमेका भीडहरू ।

मान्छे–मान्छे र छाताहरू
छाता–छाता र मान्छेहरू ।

यी छाताले छेलिएका टाउकाहरूमा
जेबुन्निसा होस् वा क्याथोरिन
क्लियोपेट्रा होस् वा फेनिच्का
सबै आ–आफ्नै कथा भोग्छन् आखिर ।

नत्र भने
बागमतीमा अलिकति टेम्स मिसाउँदा हुन्थ्यो,
पिखुवामा अलिकति नाइल बगाउँदा हुन्थ्यो ।

बुद्धले बन्दुक बोकेनन् भनेर के कुरा गर्नु ?
पियानो पनि त बजाएनन् !
न त
कुनै चित्र बनाएकै वृत्तान्त सुनिन्छ कतै ।

अङ्गुलीमालको प्रशंसा गरेकै हो
आम्रपालीलाई पनि मेरो नमस्कार सुनाइदिए
केही फरकपर्ने छैन ।

यस क्षण मलाई
मिथक, इतिहास र कथामा टाँसिएका अमूर्त आकृतिहरूको भन्दा
यो बर्सात्ले बगाइलगेका
पौरखहरूको चासो छ ।

यो भल बढेर बाटो छेक्दा
कतै पुग्न ढिलो भयो भन्ने भन्दा
मेरो माटो बग्यो भन्ने पीर भइरहेछ ।

यो पहाड
बगेरै समथल हुने हो कि भन्ने
डर लागिरहेछ ।

*असार २०५६, भोजपुर*

# बैँसभरि नबुझेको कुरा

त्यो नदीजस्तै निर्मल थियो ।
वास्तवमा त्यो परिवेश
समीरजस्तै स्वच्छ थियो ।

त्यो समीरजस्तै थियो
त्यसैले अँगाल्न सक्दिनथेँ,
नदीजस्तै थियो
त्यसैले हामफाल्न सक्दिनथेँ ।

त्यो प्यारो थियो
छेउछेउबाट हिँड्न मन लाग्थ्यो,
शीतल थियो
निरन्तर अनुभव गर्न मन लाग्थ्यो ।

मैले माया गरेको
मलाई मैलाईजस्तै माया गर्ने त्यो परिवेश
मेरा लागि
भोगिनसक्नुको थियो ।

त्यो समय मेरो निम्ति
अत्यन्त पीडादायक थियो वा
अत्यन्त स्नेहील थियो
बुझिनसक्नुको थियो ।

*बैसाख २०४९, काठमान्डौ*

## मनको गीत

फुटूँ म आफूबाट
टुक्रियूँ मेरो सम्पूर्णताका एकएक अवयवहरूमा
र
बाँचूँ सबै टुक्रामा पूर्णताले ।

यावत टुक्रा जोडिएर बनेको
यो **म**ले
बाँच्न सकेन कुनै भाग पनि
धक फुकाएर ।

आफूबाट फुकालेर आफ्ना निर्मितिहरू
देखाइदिऊँ विनिर्माणको एउटा साक्षात् नमूना
डेरिडालाई ।

मबाट भत्किएको एक अंश, एउटा मान्छे
हिँडिरहोस् सडकमा लम्र्याङ्लम्ग्राङ्,
बोलिरहोस् अज्ञानले भरिपूर्ण भएर सभाहरूमा,
दुनियाँका तमाम खबरहरू हालेर मथिङ्गलमा
समीक्षा गरिरहोस् र कराइरहोस् भीडहरू माऽ,
निमग्न रहोस् आफ्नो लघुताको पूर्णतामा ।

अर्को घोरिइरहोस्
व्यापारका हिसाबकिताब र
कर्मचारीका व्यक्तिगत फाइलहरूमा ।
एउटा पढिरहोस्
एउटा केटाकेटी खेलाइरहोस्
एउटा प्रेममा पौडिरहोस् आजीवन ।

मलाई मन नपरेको एउटा टुक्रो म
कतै कोठाभित्र थुन्निइरहोस् ।

एउटा चोइटो
घरका भित्री आवरण सिँगार्न र
आवश्यकताका भोक मेटाउन लागोस् ।
भ्याउँदैन भने टुक्र्याओस् आफूलाई अझै
तरकारी, मसलन्द, लत्ताकपडा
इन्धन र अरू लठिबज्र हेर्ने
ठेकेदार मान्छेहरूमा ।

एउटा भाग
मबाटै टुक्रिएको भन्नेसमेत बिर्सेर
हाकिमका हरेक मुर्र्ल्याईंमा थपडी बजाइरहोस्
हल्लाइरहोस् टाउको र
व्यस्त रहोस् कठपुतली चालहरूमा ।

एउटाले जिम्मा लेओस्
टेलिभिजन, रेडियो र अखवारहरू ।

आफन्त र परिचितहरूका हालखबर घोकेर बसोस् एउटा
सन्चोबिसन्चोका औपचारिकता पुऱ्याइरहोस्
कहाँ ? , के ? , कसो ? का चासोहरूमा रुमल्लिरहोस्
सोऱ्हसंस्कार र जन्मदिनहरूमा सहभागिता जनाइरहोस् ।

अर्को
आफ्ना गतिहीनताका अ-खबरहरू भट्याइरहोस् ।
गोष्ठि, जमघट र केजातिहुँधो धाइरहोस् ।

एक साँझ
भेला गरेर सबै आफूहरूलाई
एउटा समानुपातिक सम्मेलन गराऊँ ।
अरूलाई छाडिराखेर गन्जागोलको निरर्थक बहसमा,
निस्कूँ
कविलाई लिएर ।

मेरो कवि
सम्पूर्णतामा कवि नै रहोस्
नटाँसियोस् अभावले भरिएको मेरो गृहस्थसँग ।
अलग रहोस्
स्वाभिमान बेचेको मेरो जागिरेसँग ।
छुट्टियोस्
मस्तिष्कले थिचिराखेको मेरो जीवबाट ।

कविलाई हालेर आफूभित्र सम्पूर्णतामा
म
कविताको पत्रबाट
समयको खोल झिकेर फ्याँकूँ
उक्काऊँ भूगोलका डिलहरू ।
फुटाऊँ चेतनाका झ्यालढोका
भत्काऊँ विपनाका खण्डहरहरू र
निस्कूँ सपनाको उज्यालातिर ।

जीवन आफ्नै अँगालामा लट्ठिइरहोस्
प्रेमको नदी आफ्नै कारवबाट बगिरहोस्
वेदना मेरो प्रेमगीत गाएर मात्तिइरहोस्
पीरको लास फूलको सिरानीमा निदाइरहोस् ।

ज्ञानको जालोबाट फुत्किऊँ
भागूँ यो विचारहरूको जङ्गलबाट
समयको यस आँख्लामा टेकेर
भ्रमको पहाडबाट फालहानूँ मनको वेगमा ।

तमाम आविस्कारहरूलाई बोरामा कसी
लुकाइदिऊँ आइन्सटाइनहरूका मस्तिष्कका कुनाहरूमा ।

सँधै थिचिरहने आफ्नै छातीबाट निस्किऊँ
मगजलाई देउरालीमा फुसर्तले थिचिराखेर
पसूँ कल्पनाको बगैँचामा ।

लाजको आवरण सीमाना मै फुकाली
आडम्वरको थाङ्ग्रामा टाँगिराखेर
घामका किरण पहिरिएर दौडिऊँ ।

बादल बटुलेर मैदान बनाऊँ
इन्द्रेणी टाँगेर सिगारूँ ।

हावाको भकुण्डो खेल्दै
नहिँडेको बाटाको पल्लो छेऊ पुगी
रोबर्ट फ्रोस्टलाई हात समातेर बोलाऊँ र
दुनियाँतिर फर्किएर प्रलाप सुनाउन आग्रह गरूँ
गिन्सबर्गलाई ।

प्रभूको वर पाएर
निमग्न उग्राइरहेका देवकोटासित
तिमी महाकवि हौ भनी
बाजी थापूँ र
जितूँ एक झोला ताराहरू ।

बौलाहाको सपनाजस्तै यस धर्तीको भविष्यसँग
साटूँ इलियटको बाँझो भूमि र
रहरको कलमले जोतेर
एक बाली कविताको खेती गरूँ ।

यावत् टुक्रा मिसिएर बनेको
यो **म**ले
गर्न सकेन कुनै उपलब्धि ।

फूटूँ म आफूबाट र
केवल
कविलाई लिएर बाँचूँ ।

*असार २०६५, विराटनगर*

## जीवनसँगको जम्काभेटमा

इच्छाहरूको मिराज पछ्याउँदै दौडिरहेको जीवनलाई
समयको एक डिलमा बास बसेको मौका पारी
ओल्टाइ–पल्टाइ हेरेँ
चिमोटेर बोलाएँ ।

सोधेँ, अनुहारबाट आफूलाई उक्काई फाल्नुको कारण
सोधेँ, मेरै रहर बोकेर मैसँग भागिहिँड्नुको कारण
सोधेँ, अभिलाषाको त्यत्रो भारी बोकी
अक्कर–अक्कर कुदिहिँड्नुको कारण ।

ऊ सपनाहरूको ओढ्ने ओढी
निदाइरह्यो, अथवा
निदाएझैँ गरिरह्यो ।

सल्लाह दिएँ,
घामका किरण टेकेर हिँड्न सकिँदैन
आँधी उचालेर उभिन सकिँदैन
आगो निलेर हाँस्न सकिँदैन
हिउँ ओछ्याएर निदाउन सकिँदैन
पानीलाई अँगालो हालेर — — —

जुरुक्क उठेर
आफूले ओढिराखेको ओढ्ने बोकी
ऊ यसरी भाग्यो
आजसम्म फेरि भेट हुन सकेको छैन ।

*मङ्सिर २०६५, विराटनगर*

# मध्यरात सडकमा

मध्यरात सडकमा
आँखा मात्र बोकेर मोटरहरू
हल्लिरहेको हावाको पर्दा च्यात्दै
अँध्याराको सिरेटालाई खेदेझैँ गरिरहन्छन् ।

दृष्टि हराएको झन्डा छेउछाउलाई हकार्दै
आफू झन्डा भएको खुसी मै मग्न नाचिरहन्छ ।

ढोकाढोकामा उँघिरहेका पालेहरूलाई हप्काउँदै बतास्सिइरहेका
अर्द्ध–मलामी एम्बुलेन्सका एकोहोरो शङ्खघोषजस्तै चीत्कारमाथि
छ्याप्दछन् कर्कश आवाजका झोँक्काहरू
भुकाइ बोकेर ओल्लोचोक–पल्लोचोक दौडिरहेका मुखहरू ।

सातो सकिएका रुखहरू आफ्नै पातका पर्दाभित्र छोपिएर
बाटाछेउबाट अँध्यारालाई टुलुटुलु हेरिरहन्छन् ।

हुस्सुले लुटेको आफ्नो पराजित उज्यालाभरिको आभा पोखेर
नियालिरहन्छन् ल्याम्पपोस्टहरू,
तर पत्तो लगाउन सक्दैनन्
चोकचोकबाट हातखुट्टा पसारेर निदाइरहेको सडक
घोप्टो सुतिरहेछ वा उत्तानो ।

अन्धकारले प्रेमलाई छेल्दैन भन्नेमा अनभिज्ञझैँ
पुतलीहरू बत्तीसँगको आदिम खेलमा व्यस्त रहन्छन् ।

घन्टाघर
पेन्डुलम हल्लाएर तल हिँडने साँढेलाई जिस्क्याइरहन्छ ।

साँढे
स्थितप्रज्ञ कुनै कविजसरी
सम्पूर्ण निस्पट्टतालाई निलेझैँ
निस्फिक्रि
बाटालाई पछाडि ठेलिरहन्छ ।

रात हुँदैमा
सृष्टिको चित्रै च्यातिने त कहाँ रहेछ र !

तर
म उभेको धर्तीमा
सुदूर भविष्यको पल्लो पारवासम्म उज्यालो ब्यूँझने मेसो नदेखेर
मेरो मनभित्र भने
प्रलयअघिको ज्वालामुखीझैँ भयङ्कर त्रास
किन
यति बिध्न कहाली लाग्ने गरी दौडिरहन्छ ?

*माघ २०६५, विराटनगर*

# ताजमहल र मेरो प्रेम

सारा यौवन
छातीमा एउटा प्रेमाकुल मुटु बोकेरै
हिँडिरहेको हुँ ।

फक्राएर मनलाई
प्रेमको ओत बनाऊँ लागेकै हो ।
अनुरागका गहिराइहरूमा डुबेर मुटु लफ्रक्क हुँदा
निचोरेर प्रेयमै पोखूँ भइरहेकै हो,
कहिल्यै नमेटिने एक चित्र
हृदयकै रङ्गले कोरूँ भइरहेकै हो ।

उभिएर आज
यो ताजमहल अगाडि;
सूर्यकिरणको स्पर्शले लजाइरहेका सङ्गमरमरका मुस्कानहरू,
प्रेमको उचाइलाई छोएर मदहोस बतास्सिएका हावाका गुच्छाहरू,
परिक्रमरत द्रष्टाहरूका छातीभित्र गुन्जिरहेका प्रेमास्पद सङ्गीतहरू
र
आफ्नै मनभित्र छचल्किरहेका
रङ्गिन अनुभूतिका सुवासित मादकतामा लठ्िएर
म आफूलाई बिर्सिरहेको छु ।

यस बेला म
शाहजहाँलाई सम्झिरहेको छु वा मुमताजलाई
वा सम्झिरहेछु आफैँलाई ?
भ्रमित छु
अचेत छु, आफ्नै छातीको फैलाहटले पुरिएर ।

शाहजहाँ,
जसले बादशाहलाई प्रेमीभन्दा होचो बनाइदियो ।
जसले चिहानलाई मन्दिर,
प्रेमिकालाई ईश्वर,
प्रेमलाई धर्म बनाइदियो ।

कम से कम दुई फरक त पक्कै छ हामीबीच
ऊ शहंशाह थियो,
म ऊ जत्तिकै वैभवशाली हुन्थेँ भने
ताजमहल बनाउन
प्रेमिकाको मृत्यु पर्खने थिइनँ ।

*चैत २०६५, आगरा*



कुन आँखालाई हेरुँ,
नितान्त तर्कहीन उत्तर पाउनको लागि ?
वा
कसैलाई नसोधिनुपर्ने प्रश्न सबैलाई सोधिरहूँ ?
कि नसोधिएको प्रश्नको जवाफ दिइरहूँ आकाशतिर फर्किएर ?




